




# सबै एउटै छानामुनि

## आकस्मिकताको अवस्थामा अपाङ्गता समावेशी सेल्टर र बसोबास व्यवस्थापन

International Federation
of Red Cross and Red Crescent Societies
www.ifrc.org Saving lives, changing minds.

In partnership with
HANDICAP INTERNATIONAL

cbm
together we can do more

## विषय सूची

**विषयवस्तुहरू** **पृष्ठ**

# संक्षेप

मानवीय सहायताका काममा अधिकारमुखी अवधारणालाई बढावा दिने कुराको अवलम्बन गरिएको भए पनि अपाङ्गता भएका व्यक्तिहरूले बारम्बार विभेद र उपेक्षा भोगिरहेका छन् । विगतका तीन दशक यता अपाङ्गताको मुद्दामा चेतना र अपाङ्गता भएका व्यक्तिहरूले नै सञ्चालन गरेका संस्थाहरूको स्थापना र विस्तारमा बृद्धि भएको छ ।

यो बढ्दो चेतनाभित्र आकस्मिकताको अवस्थामा अपाङ्गता भएका व्यक्तिहरूले सामना गरेका अवरोध पहिचान गर्ने र न्यूनीकरण गर्ने व्यावहारिक उपाय पनि आवद्ध हुनुपर्छ ।

मानवीय कामको बारेमा सूचित गर्न र समावेशी तथा लचिलो समुदाय निर्माण गर्न अपाङ्गता भएका व्यक्तिका आफ्नै संस्थाहरूको क्षमताको विकास र प्रयोग गर्नुपर्छ ।

**"सबै एउटै छानो मुनि"** ले मानवीय संस्थाहरूले तिनका सेल्टर र बसोबास कार्यक्रमहरूमा सुनिश्चित गर्ने पहुँच र समावेशीकरणको तरिकालाई रूपान्तरण गर्न चाहन्छ । यो सन २०१३ बाट सी.बी.एम., ह्याण्डीक्याप इन्टरनेशनल, आइ.एफ.आर.सी.को सहकार्यमा सुरू भएको प्रक्रियाको परिणाम हो ।

### खण्ड क : विपद् व्यवस्थापनको चरणमा समावेशीकरण

⇒ पूर्वतयारीको चरणमा अपाङ्गतासँग सम्बन्धित सञ्जालहरूलाई सबल बनाउने ।

⇒ अपाङ्गता भएका व्यक्तिका क्षमता र आकस्मिकताका अवस्थामा अपाङ्गता भएका व्यक्तिहरूले सामना गर्नुपर्ने अवरोधको पहिचान गर्ने ।

⇒ लक्षित र समावेशी पूर्व सावधानी प्रणालीको व्यवस्थापन र योजना निर्माणमा अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागी गराउने ।

⇒ विपद्को बेला मानिसहरूलाई सुरक्षित राख्न बनाइएका ठाउँहरू अपाङ्गता मैत्री छन् भन्ने सुनिश्चित गर्ने ।

⇒ अपाङ्गताको मुद्दालाई आकस्मिकताको सुरूवातको बेलाबाटै सम्बोधन गर्ने ।

⇒ नदेखिनुलाई सम्भावित उपेक्षाको सङ्केत हो भन्ने कुरामा ध्यान दिने ।

⇒ सेल्टर र बसोबासको व्यवस्थापनमा अपाङ्गता भएका व्यक्तिका आवश्यकताका बारेमा उनीहरूसँगै परामर्श गर्ने ।

⇒ पुन:प्राप्ती (recovery )  का काममा अपाङ्गता भएका व्यक्तिहरूका संस्थालाई सहभागी गराउने ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूले सेल्टरको ढाँचा निर्माणमा प्रभाव पार्न सक्छन् र उनीहरू पुनःनिर्माणका प्रयासमा सहभागी हुन सक्छन् भन्ने कुरा सुनिश्चित गर्ने ।

⇒ पुन:प्राप्तिको चरणमा back safer बनाउने र पहुँचयुक्त बनाउने ।

## खण्ड ख : सेल्टर र बसोबास व्यवस्थापनको लागि प्राविधिक मार्गदर्शन

⇒ नयाँ योजनाबद्ध बसोबास व्यवस्थापनमा मानव निर्मित अवरोधलाई हटाउने ।

⇒ बसोबास व्यवस्थापन गरिएका ठाउँहरू र सामूहिक केन्द्रमा अपाङ्गता भएका व्यक्तिहरूको सुरक्षा र पहुँचलाई रोक्ने अवरोधलाई हटाउने ।

⇒ पाल ढुवानी गर्न, टाँग्न वा जडान गर्न र मर्मत सम्भार गर्न सघाउने ।

⇒ परामर्श र सहभागितामार्फत अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँच भएका सङ्क्रमणकालीन वा स्थायी सेल्टर उपलब्ध गराउने  ।

⇒ विद्यमान संरचनामा पहुँच अनुकूलता प्रदान गर्ने ।

⇒ राहत वितरण गर्ने स्थानहरूमा अपाङ्गता भएका व्यक्तिहरूका लागि स्वयंसेवक र  प्राथमिकता पङ्क्तिको व्यवस्था गराउने ।

⇒ आकस्मिकताको अवस्थामा उपलब्ध गराइने घरायसी सामग्रीको समूह (emergency household kits) मा अपाङ्गता भएका व्यक्तिहरूलाई चाहिने थप कुराहरू समावेश गर्ने ।

⇒ सेल्टर किट र सेल्टर सहयोगी चिजहरू (shelter support items) को प्रयोगको लागि अपाङ्गता भएका व्यक्तिहरूको लागि तालिम र प्राविधिक सहयोग प्रदान गर्ने ।

## खण्ड ग : सहभागिता र समान अवसर प्रवर्धन

⇒ बहु पहुँच ढाँचामा सूचना उपलब्ध गराउने ।

⇒ अपाङ्गता भएका व्यक्तिहरू समावेश हुनेगरी बैठक आयोजना गर्ने ।

⇒ अनुगमन र पृष्ठपोषण संयन्त्रमा अपाङ्गता भएका व्यक्तिहरूलाई समावेश गराउने तथा पहिचान गरिएका अवरोधको फलोअप गर्ने ।

⇒ भाडामा उपलब्ध गराउने आवासको पहुँचमा ध्यान दिने ।

⇒ कुनै परिवारको शरणमा रहने अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्ने ।

⇒ "कामको लागि नगद" कार्यक्रम तयार गर्दा अपाङ्गता भएका व्यक्तिहरूको क्षमता अनुकूल तयार गर्ने ।

⇒ व्यक्तिगत पहुँचयुक्त सेल्टरको लागि नगद अनुदान दिने ।

⇒ भौचर, उपकरण र निर्देशन विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा छन् भन्ने सुनिश्चित गर्ने ।

# हाम्रो भनाइ

मानवीय कार्यमा सेल्टर र बसोबास व्यवस्थापन परिचित शब्दावली हुन् जुन पर्याप्त आवासको अधिकार अन्तर्गत पर्दछन् । हरेक मानिसलाई पर्याप्त आवासको अधिकार छ र यस अधिकारलाई अन्तर्राष्ट्रिय कानुनले समेत स्वीकार गरिसकेको छ । कानुनले पर्याप्त आवास भन्नाले हावापानी एवं संरचनागत जोखिम तथा खतराबाट स्वास्थ्यमा हुने असरबाट बचाउनु र अति आवश्यकीय सेवा सुविधा तथा उपयुक्ततामा पहुँच हुनु हो भनी परिभाषित गरेको छ । अझ यसमा समावेश हुने अर्को मुख्य सर्त भनेको आवाससँग सम्बन्धित भौतिक स्थान प्रभावित व्यक्तिहरूका लागि प्रयोग गर्न सजिलो र पहुँच हुनु हो । यद्दपी एकदमै राम्रा प्रयास हुँदाहुँदै पनि विपद्पश्चात खास मापदण्डमा आधारित रहेर प्रभावित समुदायलाई प्रदान गर्न तयार गरिएका सेल्टर र बसोबासका सुविधा अपाङ्गता भएका व्यक्ति, ज्येष्ठ नागरिक तथा यस्ता सेल्टर र आवासमा बस्ने अन्य मानिसहरूले सामना गर्नुपर्ने अवरोध पर्याप्तरूपमा सम्बोधन नगरी परिवर्तन गर्न नसकिने गरी तयार (invariably designed) गरिन्छन् ।

विश्व स्वास्थ्य संगठनको अनुमानअनुसार संसारका १५ प्रतिशत मानिस कुनै न कुनै प्रकारका अपाङ्गताबाट प्रभावित छन् । हेल्पएज इन्टरनेशनलको प्रतिवेदनअनुसार संसारमा ६० वर्षभन्दा बढी उमेरका मानिसहरूको जनसंख्या १२ प्रतिशत छ र यो संख्या आगामी सन् २०५० सम्ममा बृद्धि भएर २० प्रतिशत पुग्नेछ । अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धिले अपाङ्गता भएका व्यक्तिहरूलाई आकस्मिक वा विपद् र जोखिमका अवस्था लगायत जीवनका हरेक पक्षमा समावेशीकरण गर्नुपर्ने कुरामा जोड दिएको छ । त्यसैले अब समयमै सेल्टर र बसोबाससम्बन्धी सहायतामा अपाङ्गता भएका व्यक्ति र ज्येष्ठ नागरिकहरूका विशेष आवश्यकताको पर्याप्त सम्बोधनलाई सुनिश्चित गर्नुपर्छ । "सबै एउटै छानो मुनि" को लक्ष्य विपद्को अवस्थामा अपाङ्गता समावेशी सेल्टर र बसोबास व्यवस्थापनका लागि प्राविधिक मार्गदर्शन प्रदान गरी राम्रा प्रयास र यसको व्यवहारिक कार्यान्वयनको बीचमा रहेको खाडल (Gaps)मा सेतुको काम गर्नु हो ।

तीनवटा संस्थाहरू- आइ.एफ.आर.सी., ह्याण्डीक्याप इन्टरनेशनल र सी.बी.एम., जोसँग विपद् पश्चातका अवस्थामा जोखिममा रहेका र समस्यामा परेका समूहको आवश्यकतालाई सम्बोधन गरेको वस्तुगत अनुभव छ, यी तीनवटै संस्था मिलेर निर्माण गरेको यस पुस्तकले यी संस्था तथा अन्य सङ्घसंस्थाहरूमा प्रयोगमा रहेका मार्गदर्शन र यसैगरी अरू सम्बन्धित राष्ट्रिय अन्तर्राष्ट्रिय मापदण्ड एवं पेशागत विज्ञतालाई समेटेको छ । प्रस्तुत सामग्री मानवीय कार्य गर्दा सेल्टर र बसोबास व्यवस्थापनको योजना निर्माण तथा कार्यान्वयनलाई पूर्णरूपमा समावेशी बनाउन आवश्यक जानकारी दिने मुख्य सन्दर्भ सामग्री बन्नेछ भन्ने अपेक्षा गरिएको छ ।

**गरहम साउन्डरस**
**प्रमुख, सेल्टर तथा सेटलमेन्ट विभाग**
**रेडक्रस तथा रेडक्रिसेन्ट सोसाइटी, अन्तर्राष्ट्रिय महासंघ**

Benoit Aurenche
Basic Need Technical Advisor
Handicap International

Valerie Scherrer
Director, Emergency Response Unit
CBM

# परिचय

प्राकृतिक विपद् र आकस्मिक अवस्थामा अपाङ्गता भएका व्यक्तिहरूप्रति अपनाउनुपर्ने दायित्वका बारेमा अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धिमा स्पष्ट रूपमा व्याख्या गरिएको छ । यसको बाबजुद पनि सरकारी निकाय र मानवीय कार्य गर्ने संस्था विपद्का लागि पूर्व तयारी तथा प्रतिकार्य (response ) का गतिविधि अपाङ्गता भएका व्यक्तिहरूलाई पर्याप्तरूपमा समावेश गराउन असफल रहेका छन् ।

विद्यमान मार्गदर्शनको पुनरावलोकन (सीवीएम, ह्याण्डीक्याप इन्टरनेशनल र अरू संस्थाहरूले गरेको), राष्ट्रिय तथा अन्तर्राष्ट्रिय मापदण्डको पालना एवं तुलना र लेखक तथा पुनरावलोकनकर्ताको व्यक्तिगत अनुभवका आधारमा सिफारिस तयार गरिएको हो ।

### यस दस्तावेजको क्षेत्र

यो दस्तावेज मानवीय संकटको बेला गरिने सेल्टर र बसोबासको सहयोगमा केन्द्रित छ । यसलाई तीन चरणमा विभाजन गरिएको छ : पूर्वतयारी, आकस्मिक प्रतिकार्य र शीघ्र पुन:प्राप्ती (Early Recovery ) ।

यस सन्दर्भमा सेल्टर सहयोगअन्तर्गत आकस्मिक सेल्टरका लागि चाहिने उपकरण र सामग्री, घरचलाउन चाहिने सामग्री र पालको वितरण, सेल्टरको सङ्क्रमणकालीन समाधान तथा सेल्टर सबैको लागि पहुँचसमेत हुनेगरी बनाउन चाहिने प्राविधिक तथा व्यावहारिक सहयोग पर्छन् ।

बसोबास व्यवस्थापनअन्तर्गत अस्थायी बसोबास (क्याम्प)को योजना र स्तरोन्नतिसम्बन्धी मार्गदर्शन, अपाङ्गता भएका व्यक्तिहरूका लागि दैनिक आवागमनको लागि चाहिने सहयोग, समुदायमा सेल्टर र उपलब्ध सेवाको बीचमा गर्नुपर्ने आवागमनको लागि चाहिने सहयोग पर्छन् ।

## लक्षित समूह

यस दस्तावेजको मुख्य लक्षित समूह रेडक्रस र रेडक्रिसेन्ट आन्दोलनका राष्ट्रिय सोसाइटीअन्तर्गतका कर्मचारी र स्वयंसेवक हुन् । भाग "क" मा उनीहरूका लागि सम्बन्धित मार्गदर्शन छन्, तर सबै सिफारिस विषयवस्तुसँग सम्बन्धित र बुझ्न सकिने हुनुपर्छ भनी तिनीहरूलाई उदाहरणसहित प्रस्तुत गरिएको छ । कार्यक्रम व्यवस्थापक र निर्णयकर्ताहरू पनि यसका लक्षित समूह हुन्, खास गरेर क१.१. , क.२.१., क.३.१. र खण्ड "ग" का लागि । सेल्टर विशेषज्ञहरूका लागि भने भाग "ख" सम्बन्धित छ ।
यो दस्तावेजको आधारमा तालिम मोड्यूलको समूह तयार गरिएको छ । जसमा माथि उल्लेखित तीन समूहमध्ये प्रत्येकको लागि सामान्य परिचय र लक्षित सत्र समावेश छन् ।

## यस दस्ताबेजको प्रयोग कसरी गर्ने ?

यस दस्तावेजका भाग तथा अध्याय अलग्गै अलग्गै स्वतन्त्र रूपमा पढ्न र उपयोग गर्न सकिन्छ, तर तपाईँले अगाडि अध्ययन गर्नको लागि विभिन्न भागहरूको बीचमा सन्दर्भसामग्री पाउनुहुनेछ । केही मुख्य शब्दावली र अवधारणालाई तलका पानाहरूमा व्याख्या गरिने छ ।
हरेक अध्याय र भागको सुरूमा तपाईँले यसमा संलग्न विषयवस्तुको संक्षेप पाउनुहुनेछ ।
हरेक अध्यायको अन्त्यमा ध्यान पुर्याउनुपर्ने मुख्य सवालको निम्ति एउटा रूजु सूची समावेश गरिएको छ ।
दस्तावेजको अन्त्यमा छोटकरी शब्दावलीको व्याख्यालगायत अनुसूचीको समूह पाउन सकिनेछ ।

# परिभाषा

**अपाङ्गता**

कुनै कारणले दीर्घकालीन शारीरिक, मानसिक, बौद्धिक वा इन्द्रीय जन्य क्षति वा विचलन भएकालाई अपाङ्गता भएका व्यक्ति भनीन्छ । उनीहरू विभिन्न अवरोधसँग अन्तरक्रिया गर्दा समाजमा अन्य सरह समान आधारमा पूर्ण र प्रभावकारी रूपमा सहभागी हुन पाएका हुँदैनन् ।

-अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि २००६ (भाव अनुवाद)



यस दस्तावेजभरि नै अपाङ्गता भएका व्यक्ति भन्नाले अपाङ्गता भएका केटाकेटी, महिला र पुरूष सबै बुझ्नुपर्छ ।

**अपाङ्गता भएका व्यक्तिका संस्था (डी.पी.ओ.)**

अपाङ्गता भएका व्यक्तिहरू आफैले सञ्चालन र नियन्त्रण गरेका संस्था डी. पी. ओ. हुन् । यी संस्थाले सार्वजनिक जीवनमा चेतना जगाउने र सेवामा पहुँच पुर्‍याउने काम गरिरहेका छन् । सबै अपाङ्गता भएका व्यक्तिहरू डीपीओका सदस्य हुँदैनन्, तर आकस्मिकको अवस्थामा आवश्यकता पहिचान गरी सम्बोधन गर्नमा महत्वपूर्ण भूमिका निर्वाह गर्न सक्छन् ।

**क्षति (विचलन)**

क्षति वा विचलन अपाङ्गताको एउटा भाग हो जसले हात खुट्टा, शरीरका अङ्ग, संरचना र मानसिक कार्यमा भएको आंशिक वा पूर्ण नोक्सानीलाई जनाउँछ । अपाङ्गताका अरू भागहरूमा क्रियाकलापमा सीमित र सहभागितामा अवरोध पर्दछन् । **-विश्व स्वास्थ्य संगठन**

**समावेशीकरण**

समावेशीकरण भनेको समुदायस्तरका कार्यक्रमहरू बनाउने अधिकारमा आधारित अवधारणा हो जसले आधारभूत सेवामा अपाङ्गता भएका व्यक्तिहरूको समान पहुँच, त्यस्ता सेवाको निर्माण र कार्यान्वयनमा समान आवाज सुनिश्चित गर्ने लक्ष्य लिएको हुन्छ ।

यस दस्तावेजमा प्रस्तुत गरिएका धेरैजसो सिफारिस विद्यमान शारीरिक र इन्द्रीयसम्बन्धी अपाङ्गता केन्द्रीत सन्दर्भ सामग्रीमा आधारित छन् । सेल्टर र बसोबाससँग सम्बन्धित प्रतिकार्यमा मानसिक अपाङ्गता र बौद्धिक अपाङ्गता भएका व्यक्तिहरूको समावेशीको लागि थप उपाय आवश्यक छ ।

**सेल्टर**

***"व्यक्तिहरूलाई आफ्नो गोपनीयता र आत्मसम्मानका साथ बस्नयोग्य हुनेगरी सुरक्षित र स्वस्थ वातावरणमा निश्चित स्थान ओगटेर वा घेरेर बनाइएको बस्ने ठाउँ ।"***

आकस्मिक सेल्टर सहयोग भन्नाले " द्रुत प्रतिकार्य समाधान जस्तै पाल, विद्युत रोधक सामग्री तथा अरू अस्थायी आकस्मिक सेल्टर सामाधान र सेल्टरसँग सम्बन्धित गैरखाद्य वस्तुहरू लगायत विपद् प्रभावित व्यक्तिको जीवन रक्षा सुनिश्चित गर्न जरूरी आधारभूत र तात्कालिक सेल्टरको आवश्यकताहरूको व्यवस्था हो ।"

**-आइएफआरसी र ओचाबीच भएको समझदारी**

सेल्टर व्यवस्थापन केवल निर्माण होइन यो प्रकृया हो । विपद पश्चात सेल्टरको आवश्यकता पूरा गर्ने कामलाई प्रभावित घरपरिवारले विभिन्न सामग्रीहरूको उपयोग गरी प्राविधिक, आर्थिक र समाजिक सहयोगमा गरिएको सेल्टर व्यवस्थापनको प्रकृयाको रूपमा हेरिनुपर्छ ।

**-आइएफआरसी सेल्टर र बसोबास इकाई**

**बसोबास व्यवस्थापन**

*"निश्चित स्थान ओगटेर रहेको समुदाय जहाँ व्यक्ति र समूहलाई आफ्नो गोपनीयता र आत्मसम्मानका साथ रहन बस्न स्वस्थ र सुरक्षित वातावरणमा प्राप्त हुन्छ । "*

बसोबासको योजनाबद्ध वा स्वतस्फूर्त पनि हुनसक्छ ।



"बसोबास" र "शिविर" एकअर्कामा अदलबदल गर्न सकिने शब्दावली हुन्, तर पहिलोले पछिल्लोलाई निकै विस्थापित गरिसकेको छ । सम्भवत "शरणार्थी शिविर" ले बाह्य सहयोगको भरमा चल्ने भन्ने कुरालाई सङ्केत गर्ने र "बसोबास" ले स्वनिर्भर तथा क्रियाशील समुदायलाई संकेत गर्ने भएकोले यसो भएको हुनसक्छ ।

**दयनीयता वा अत्याधिक जोखिमको अवस्था**

"प्राकृतिक वा मानवजन्य विपद् वा खतराको प्रभावलाई सहन गर्ने, पूर्वानुमान गर्ने, पुन:प्राप्ती गर्नसक्ने क्षमताको रूपमा व्यक्ति वा समूहको चरित्र रहन्छ ।"

**-आइ.एफ.आर.सी.**

## तालिका १ : अवरोधसम्बन्धी अवधारणा

अपाङ्गता भएका व्यक्तिहरूको समान सहभागिता र अवसर प्राप्तिमा रोकावट सिर्जना गर्न हाम्रा वरिपरी विभिन्न प्रकारका अवरोध छन् सक्छन् । यीमध्ये केही अवरोध पहिले नै विद्यमान रहेका छन् भने केही विपद्को अवस्थाले सिर्जना हुन्छन् र जसले नयाँ अपाङ्गतालाई पनि ल्याउनसक्छ ।

**भौतिक अवरोध**

भौतिक अवरोध प्राकृतिक र मानव निर्मित हुन सक्छन् र यसको सूचि निकै लामो छ । सामान्य मानव निर्मित अवरोधमा भर्याङ, साँघुरा ढोका, सतह परिवर्तन र थ्रेसहोल्ड, पहुँच प्राप्त गर्न नसकिने सार्वजनिक सवारी साधन, पहुँचयुक्त सार्वजनिक शौचालयको अभाव आदि ।

भूकम्प र बाढी जस्ता विपद्ले नयाँ भौतिक अवरोध सिर्जना गर्छ ।

सेल्टर र बसोबाससँग सम्बन्धित हस्तक्षेपभित्रै पनि अवरोध हुनसक्छ । जस्तैः सेल्टर वा शौचालयको प्रवेशद्वारमा रहने खुड्किला, सूचनाको पहुँच र सबै प्रकारका अपाङ्गता भएका व्यक्तिहरूले उपयोग गर्न नसक्ने सामग्री आदि ।

**सूचनामा अवरोध**

सूचनालाई सबैका लागि पहुँच पुग्ने गरी उपलब्ध गराइँदैन भने सूचना र सञ्चारमा अवरोध हुन्छ । यस्ता प्रकारका अवरोध अदृश्य हुन सक्छन्, तर यस्ता अवरोध कम छैनन् । यस्ता अवरोधले इन्द्रीयजन्य अपाङ्गता रहेका धेरै ठूलो सङ्ख्यामा मानिसहरूलाई अलग्याएको छ ।

विपद्को पूर्व चेतावनी प्रणाली, मानिसहरूलाई सुरक्षित स्थानमा लैजाने कुरा, राहत सञ्चालन र अनुदान सहयोगमा पहुँच स्थापित गर्ने सबै अवस्थामा सूचनाले ठूलो फरक पार्न सक्छ ।

अधिकांश अपाङ्गता भएका व्यक्तिहरू आफूलाई हेरचाह गर्ने व्यक्ति र सूचनामा पहुँचको लागि सहयोगी सञ्जालसँग निर्भर हुन्छन् । तसर्थ विपद्को कारणले भत्किएका सूचना र सञ्चारका सञ्जालहरूको पुन:स्थापना र प्रतिस्थापनलाई उच्च प्राथमिकतामा राखिनुपर्छ ।

यस दस्तावेजमा गरिएका सिफारिस अपाङ्गता भएका व्यक्तिहरूले विपद् वा आकस्मिकताका अवस्थामा सेल्टर र बसोबासमा सामना गर्नुपरेका अवरोधका आधारमा गरिएका छन् तर यी सिफारिस पहुँचसम्बन्धी राष्ट्रिय मापदण्ड र पूर्वतयारीका योजनाको निर्माणमा पनि काम लाग्छन् ।

**दृष्टिकोणजन्य अवरोध**

हुन त अपाङ्गता भएका व्यक्तिहरूप्रतिको नकारात्मक दृष्टिकोणमा परिवर्तन सुरू भएको छ, तैपनि अझै यस्ता कुराहरू अपाङ्गता भएका व्यक्तिहरूको पूर्ण र प्रभावकारी सहभागिताका मुख्य अवरोध हुन् ।

यस्ता नकारात्मक दृष्टिकोण समाजका हरेक तहदेखि नीति निर्मातासम्म र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय गैर सरकारी संस्थाहरूमा समेत व्याप्त छ ।

समुदायका सबै सदस्यहरूलाई सेल्टर र बसोबाससँग सम्बन्धित गतिविधिहरूमा संलग्न गराएर यस्ता अवधारणालाई चुनौति दिन सकिने सम्भावना छ । सहभागितामा रहेका दृष्टिकोणजन्य अवरोधलाई सम्बोधन गर्नु र तोड्नु अपाङ्गतालाई कम गर्ने एउटा उपाय हो ।

**संस्थागत अवरोधहरू**

संस्थागत अवरोधहरू भन्नाले त्यस्ता संस्थागत प्रक्रिया र नीतिहरू हुन् जसले अपाङ्गता भएका व्यक्तिहरूलाई विभेद गर्छ । राष्ट्रिय सोसाइटीहरू र मानवीय कार्य गर्ने निकायहरूको सन्दर्भमा भन्नुपर्दा संस्थागत विभिन्न अभ्यासहरूलाई भन्न सकिन्छ । (जस्तै कर्मचारी छनौट नीति जुन अपाङ्गता भएका व्यक्तिहरूको लागि लचिला र सहज छैनन् जसले उनीहरूलाई अलग्याएको छ)

यस दस्तावेजमा हामी मुख्य रूपमा विपद् व्यवस्थापनका विभिन्न चरणहरूमा हुने सेल्टर र बसोबासको काममा हुने भौतिक तथा सूचनासँग सम्बन्धित अवरोधहरूमा केन्द्रित हुन्छौँ र मानवीय कार्यकर्ताहरूलाई यस्ता र अन्य अवरोधलाई सकेसम्म सम्बोधन गर्ने गरी मार्गदर्शन प्रदान गर्छौं ।

## तालिका २ : पहुँचको अवधारणा

पहुँच : विशेषण – प्राप्त गर्न, प्रवेश गर्न, प्रयोग गर्न र बुझ्न सहज । (१)

**क्षेत्र, स्थल वा सेल्टरमा कसरी पुग्ने ?**

सेल्टर र समुदायमा उपलब्ध विभिन्न सेवा तथा सार्वजनिक स्थानका बीचमा पुहुँच सुनिश्चित गर्नुहोस् । यसो गर्दा सेल्टर र बसोबास दुवैको डिजाइनमा असर पार्छ र भौतिक अवरोध हटाउन र पर्याप्त सङ्केत र प्रकाशको व्यवस्था आवश्यक हुन्छ ।

यस क्रममा जब हामीले स्थान बनाउने र डिजाइन गर्छौं त्यतिबेला पहुँचका चारवटा तहमा ध्यान दिनुपर्छ ।

**सेल्टर र यसका भागमा कसरी प्रवेश गर्ने ?**

सेल्टर तयार भइसकेपछि अपाङ्गता भएका व्यक्ति लगायत सबैको त्यसमा सहज पहुँच हुनुपर्छ ।

र्‍याम्प, समात्ने बार र ह्वीलचियर सहजै पस्न सक्ने गरी पस्ने ढोका चौडा बनाएर पहुँच प्राप्त गर्न सकिन्छ ।

यिनै कुरा बसोबास, स्वास्थ्य, शिक्षा, संरक्षण, दर्ताका साथै पानीको धारा, शौचालय र सरसफाइसम्बन्धी सुविधामा पनि लागू हुन्छन् ।

(1) Collins English Dictionary (2012). http://www.collinsdictionary.com

कुनै पनि आकस्मिक प्रतिकार्यसम्बन्धी कार्यक्रमहरूको डिजाइन, कार्यान्वयन र व्यवस्थापन गर्दा त्यसलाई वातावरणसँग अपाङ्ता भएका व्यक्तिहरूले कसरी अन्तरक्रिया गर्छन् भन्ने कुरामा ध्यान दिनु महत्वपूर्ण हुन्छ । यसलाई क्षेत्रीय तहमा यातायातदेखि लिएर सानोस्तरका घरायसी कामसम्म, बसोबासमा पहुँचदेखि व्यक्तिगत सेल्टरसम्म हेरिन्छ ।

**सेल्टर र यसका सुविधा कसरी प्रयोग गर्ने**

सेल्टरमा ठाउँहरूको प्रयोगलाई सम्बोधन गर्दा व्यक्तिको निजीपन वा गोपनीयता, सुरक्षा र पहुँच प्रदान गर्ने कुरामा ध्यान दिइनुपर्दछ ।

सेल्टरमा स्थानको उपयोग कसरी गरिन्छ भन्ने बारेमा बुझ्न तपाईँले सम्बन्धित प्रयोगकर्तासँग परामर्श गरी मानिसका दैनिक जीवनका विभिन्न पक्षलाई हेर्नुपर्छ । जस्तैः झ्याल कसरी खोल्ने र लगाउने, ओछ्याउने गुन्द्री वा सुकुल, ओढ्ने लुगा, शौचालयको डिजाइन, खाना पकाउने ठाउँ, स्वास्थ्य सुविधा जस्ता मुख्य समान र थप आवश्यकतालाई मिलाएर राख्ने तरिका, थप आवश्यकता ।

**सूचना र प्रशिक्षण कसरी लिने**

सबै कुरा सम्बोधन गर्दागर्दै पनि अपाङ्गता भएका व्यक्तिहरूलाई प्राविधिक प्रशिक्षण र सूचनामा सहभागी गराइएन भने पहुँचको वातावरण बनाउने शृङ्खला भङ्ग हुन्छ । यसअन्तर्गत मर्मत सम्भारका मुद्दा लगायत गुनासा र पृष्ठपोषणका लागि कोसँग सम्पर्क राख्ने भन्ने बारेमा हुने सार्वजनिक बैठक तथा छलफलमा अपाङ्गता भएका व्यक्तिहरूको अर्थपूर्ण सहभागिता हुनपर्छ ।

# तालिका ३ : सञ्चारका तरिकाहरू

तल तपाईँले विभिन्न सञ्चारका तरिका र तिनीहरू विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूको लागि कसरी उपयुक्त छन् भन्ने बारेमा उदाहरण पाउनुहुनेछ ।

**श्रव्य सङ्केत**

*उदाहरण : घण्टी, आल्राम, साइरन, रेडियो, ढोल, लाउडस्पिकरबाट दिने सूचना ।*

यो दृष्टिविहीन व्यक्तिहरूका लागि उत्तम हो र अरूलाई पनि उपयोगी हुन्छ ।

यो कुरा मानिसलाई सुरक्षित स्थानमा लैजाने काममा कसरी प्रतिक्रिया दिने र सहयोग गर्ने भन्ने बारेमा दिइने तालिममा पनि समेट्नुपर्छ ।

**सङ्केत र हाउभाउ**

*उदाहरण : साङ्केतिक भाषा र शारीरिक हाउभाउ*

अन्य सञ्चारका तरिका प्रभावकारी हुन सकेनन् भने यो तरिका अपनाउन सम्भव छ । यसलाई मानिसलाई सुरक्षित स्थानमा लैजाने काममा कसरी प्रतिक्रिया दिने र सहयोग गर्ने भन्ने बारेमा दिइने तालिममा पनि समेट्नुपर्छ ।

सुन्नमा समस्या हुने व्यक्तिले कुनै प्रकारको साङ्केतिक भाषाको ( स्थानीय होस् वा राष्ट्रिय) प्रयोग गरी सञ्चार गर्न सक्छन् कि भनी लेखाजोखा गर्नुहोस् ।

**दृश्य सङ्केत**

*उदाहरण : झण्डा, निभ्दै बल्दै गर्ने बत्ति ।*

यो सुनाइसम्बन्धी समस्या भएका व्यक्तिहरूका लागि उत्तम हो र दृष्टिसम्बन्धी समस्या भएका व्यक्ति बाहेक अरूलाई पनि उपयोगी हुन्छ ।

तसर्थ आकस्मिकको अवस्थामा हतारमा दिइने पूर्व चेतावनीमा श्रव्य र दृश्य दुवै एकसाथ रूपमा भएको सङ्केत उपयुक्त हुन्छन् । *(जस्तै; आगलागीको बेला दिइने आल्राम)*

**मुद्रण गरिएका सामग्री**

*उदाहरण : पोष्टर, लिफलेट र तस्वीर ।*

यस्ता सामग्रीले दृष्टिविहीन वा देख्नमा समस्या हुने व्यक्तिहरूलाई भने अलग्याउँछ ।

सन्देशलाई सरल र छोटो रूपमा राख्नुहोस् र चित्रको प्रयोग गर्नुहोस् ।

सञ्चार गर्नुपर्ने व्यक्तिले ब्रेल पढ्न सक्छन् भने उनलाई पूरक उपायको रूपमा ध्यान दिनुहोस् ।

# कृतज्ञता

**परियोजना समन्वयकर्ता :** कोरिन ट्रेहरने (सेल्टर र बसोबास, रेडक्रस र रेडक्रिसेन्ट सोसाइटीको अन्तर्राष्ट्रिय महासङ्घ)

**मुख्य लेखक :** भिदार ग्लेट्टे, डेभिड साका र भेलरी डरनाउडेट

यस मार्गनिर्देशिकाको पुनरावलोकन आइ.एफ.आर.सी., सी.बी.एम. र ह्याण्डीक्याप इन्टरनेशनलले संयुक्त सहकार्यमा गरेका हुन् । यस प्रक्रियामा महत्वपूर्ण योगदान पुर्याएका बेनोइट अउरेनचे (एच.आई.), अमन्दा मेकक्लेल्याण्ड (आइ.एफ.आर.सी.), भेलेरी चेरर (सी.बी.एम.)लाई पनि धन्यवाद छ ।

Davaajargal Baasansuren, Laure Boukabza, Cecilia Braedt, David Brown, Javier Cidón, Emma Delo, Siobhán Foran, Claire Holman, Hakan Karay, Jim Kennedy, Maria Kett, Dave Mather, Pablo Medina, Supriya Prabhu Mehta, Sonia Molina, Hugues Nouvellet, Patrick Oger, Sylvain Rouaud, Marjorie Soto Franco, Sandra d'Urzo र Antonella Vitale लाई विशेष धन्यवाद । उहाँहरू पुनरावलोकन प्रक्रियामा सँगसँगै सहभागी हुनुभएको थियो ।

Nazmul Bari, Anna Bjereld, Henri Bonnin, Marion Cézard, Emmanuelle Compingt, Pilar Chavez, Benjamin Dard, Geoffrey Guimberteau, Seki Hirano, Habibullah Mujadadi, Monica Noro, Emma Pettey, Anna Pont, Atif Sheikh, Nerea Thigo, Tushar Wali, Mark Wooding and Jake Zarins लगायत ती सबै व्यक्तित्वलाई थप धन्यवाद । उहाँहरूले अवस्था/घटना अध्ययन तयार गरेर पठाउनुका साथै महत्वपूर्ण सुझाव दिनुभएको थियो ।

अध्याय चित्र (पेज २०, ३७, ५०, ६६, ८२, ९७, ११२, १२८, १३६) : सिल्भा सेलेघिन

प्राविधिक तथा अन्य उदाहरण र चित्र : भिदार ग्लेट्टे ।

# आकस्मिक व्यवस्थापनका चरणमा समावेशीकरण

खण्ड “क” तीन खण्डमा विभाजित छ र हरेक खण्ड विपद् व्यवस्थापनका विभिन्न चरणसँग सम्बन्धित छ । तपाईँ समस्या प्रतिकार्यमा संलग्न हुनुहुन्छ भने सिधै खण्ड क २ मा जानुहोस् र अरू पछि पढ्नुहोस् । तपाईँ पूर्वतयारीका क्रियाकलापमा संलग्न हुनुहुन्छ भने तपाईँले सबै खण्डहरू अध्ययन गर्नुपर्छ, तर यससँग सम्बन्धित मुख्य सुझाव भने खण्ड क १ मा छन् । अध्याय क ३ मा दिएका सिफारिस शीघ्र पुन:प्राप्तिका लागि उपयोगी हुन सक्छन् र विपद्भन्दा बाहेकका अवस्थामा पनि उपयोगी हुन्छ ।

**विभिन्न खण्डमा समावेश विषयवस्तु**




विभिन्न प्रकारका सञ्चारका साधन उपयोग नगरेसम्म सुन्नमा समस्या हुने र अन्य इन्द्रीयसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरू पूर्व चेतावनी सन्देशबाट बञ्चित हुन्छन् । (क.१.३.)




# क१. पूर्वतयारी

यस खण्डमा सेल्टर र बसोबास क्षेत्रमा योजना एवं व्यावहारिक हस्तक्षेपमार्फत अपाङ्गता भएका व्यक्ति, राष्ट्रिय रेडक्रस सोसाइटी र रेडक्रिसेन्ट सोसाइटी समावेश भएर समुदायमा विपद्को पूर्वतयारी कसरी बढाउने भन्ने बारेमा सिफारिस गरिएका छन् । राष्ट्रिय सोसाइटीहरूले अधिकारीहरूलाई समावेशी पूर्वतयारी योजना बनाउन सहयोग गर्नुपर्छ र यस प्रक्रियामा अपाङ्गता भएका व्यक्ति तथा उनीहरूले सञ्चालन गरेका संस्थाहरूको मुख्य भूमिका छ भन्ने सुनिश्चित गर्नुपर्छ ।

### यस खण्डमा समावेश गरिएका विषयवस्तु



आइएफआरसीको विपद् पूर्वतयारी नीतिले विपद्को अत्याधिक जोखिममा रहेका व्यक्ति र समुदायको पहिचान गर्ने तथा समुदायमा आधारित विपद् पूर्वतयारी रणनीतिलाई जनाउँछ । जसले विद्यमान संरचना, अभ्यास, सीप र विपद् सामना गर्ने संयन्त्रलाई जनाउँछ । यस नीतिमार्फत जोखिममा रहेका समुदायको विपद्को सामना गर्ने क्षमतामा सुधार गर्ने भनी निर्देशित गरिएको छ ।

“ ……सहयोग गरिएको जनसंख्या विपद्को लागि तयारी र योजना निर्माणमा सहभागी हुनुपर्छ । सबै क्रियाकलाप र कार्यक्रमहरू लिङ्ग, पुस्ताका मुद्दा र जोखिममा रहेका समूहको आवश्यकताप्रति सम्वेदनशील हुनुपर्छ जस्तै अपाङ्गता भएका व्यक्ति”

(१) विपद् पूर्वतयारी नीति आइएफआरसीको १२ औं साधारणसभाले २६ अक्टुवर १९९९ मा अबलम्बन गरेको हो ।

## क१.१.पूर्वतयारी योजनामा अपाङ्गतासम्बन्धी जनचेतना

राष्ट्रिय पूर्वतयारी र भैपरी आउने योजना निर्माणमा राष्ट्रिय रेडक्रस सोसाइटी र रेडक्रिसेन्ट सोसाइटीको केन्द्रीय भूमिका रहन्छ। विपद्का बेलामा अपाङ्गता भएका व्यक्तिहरू बढी जोखिममा पर्ने मध्येका समूह हुँदाहुँदै पनि योजना प्रक्रियामा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग ज्यादै कम परामर्श गर्ने गरिन्छ।

अध्ययनहरूले देखाएअनुसार सन् २०११ मा जापानमा गएको सुनामी र भूकम्पका कारणले अरू मानिसहरूको तुलनामा अपाङ्गता भएका मानिसहरूको मृत्युदर दुगुना थियो। (२)

**१: अनुभवको नक्शाङ्कन** **क.१.१.१**

अपाङ्गता भएका व्यक्तिलाई सेल्टर उपलब्ध गराएको वा उनीहरूसँग काम गरेको तपाईँको राष्ट्रिय सोसाइटी वा संस्थाको अनुभव र योसँग भएको विद्यमान क्षमता पहिचान गर्नुहोस्।

**२: सञ्जालीकरण** **क.१.१.२**

सम्बन्धित क्षेत्रमा अपाङ्गता भएका व्यक्तिहरूसँग काम गरिरहेका सञ्जाल वा अपाङ्गता भएका व्यक्तिहरूले सञ्चालन गरेका संस्थाहरूको नक्शाङ्कन गर्नुहोस्। यी संस्था र सञ्जाललाई समुदाय पूर्वतयारी योजना निर्माणसम्बन्धी गतिविधिमा मुख्य भूमिका निर्वाह गर्न कसरी सहयोग गर्न सक्नुहुन्छ पत्ता लगाउनुहोस्।

मिश्रित र विवादग्रस्त अवस्था सिर्जना नहोस् भन्नको लागि अपाङ्गता भएका व्यक्तिका संस्था र अपाङ्गता सञ्जालसँग भेट्नु पहिले विभिन्न क्षेत्रहरूसँग समन्वय गर्नुपर्दछ। पूर्व तयारीको चरणमा पनि आकस्मिकताको अवस्थामा निर्वाह गर्नुपर्ने स्पष्ट जिम्मेवारीहरूको तय गर्नुहोस्।

(२) "Column 4: Mortality rate of people with disabilities in the Great East Japan Earthquake" from *Annual Report on Government Measures for Persons with Disabilities* (2012) Cabinet Office, Government of Japan. Retrieved from http://www8.cao.go.jp/shougai/english/annualreport/2012/index-pdf.html

एकदमै जटिल र वेवास्ता गर्नुपर्ने जस्तै "जोखिममा रहेका समूह" वा "विशेष आवश्यकता भएका व्यक्ति" लाई छुट्याउने ।



**३: विद्यमान योजनाको समीक्षा** **क१.१.३**

विद्यमान योजनाको एकसाथ पुनरावलोकन/समीक्षा गर्न सरकारी अधिकारीहरू (खास गरेर अपाङ्गता र पूर्वतयारीसँग सम्बन्धित) र अपाङ्गतासम्बन्धी सरोकारवालालाई निमन्त्रणा गर्नुहोस् । सेल्टर तथा बसोबासको पूर्वतयारीमा केन्द्रित हुने र अपाङ्गता भएका व्यक्तिहरूसँग सम्बन्धित विषयलाई जोड दिनुहोस् ।

**४: राष्ट्रिय मापदण्ड** **क१.१.४**

संलग्न निकायहरूले राष्ट्रियस्तरमा पहुँच भएका डिजाइनहरूको लागि कानुन वा निर्देशिका छन् कि छैनन् पहिचान गर्नुहोस् । छैन भने यो पूर्वतयारी योजना निर्माण र लेखाजोखाको समावेशी प्रक्रियाको एउटा अपेक्षित उपलब्धि हुनसक्छ ।

**५: जनचेतना विकास** **क१.१.५**

पूर्वतयारी योजनामा सार्वजनिक जनचेतना अभियान, प्रतिकार्य दलको तालिम र विपद् प्रतिकार्यको अभ्यास गर्ने कुरा समावेश गर्नुपर्छ । वृहत् सामुदायिक सचेतना PASSA र VCA को एउटा मुख्य उद्देश्य हुनुपर्छ । (हेर्नुहोस क१.२)

**६: लेखाजोखा गर्ने उपकरण** **क १.१.६**

विपद् आवश्यकता लेखाजोखा फाराममा सेल्टर र अपाङ्गताको बारेमा प्रश्न समावेश गर्नुहोस् । यस फाराममा उल्लेख भएका विषयवस्तुको बारेमा अन्य संस्थाहरूसँग छलफल गर्नुहोस् । अपाङ्गतासँग सम्बन्धित विषयको अपाङ्गता फोकल प्वाइन्ट र सम्बन्धित संस्थाहरूसँग समीक्षा आयोजना गर्नुहोस् ।



विपद् जोखिम न्यूनीकरण दिवस, सन् २०१३ को अवसरमा प्रयोग गरिएको अपाङ्गता विषयसँग सम्बन्धित जनचेतना अभियानको सामग्री http://www.cruzroja.org/#!dird/c371 मा हेर्न सकिन्छ ।

(३) The Philippines Accessibility Law of 1983 (Batas Pambasa Bilang 344), for example, states that all buildings and infrastructure for public use must be fully accessible. The law includes minimum standards and clear penalties for non-compliance.

**क.१.१ : घटना अध्ययन**

राष्ट्रिय तथ्याङ्कअनुसार सन् २०१० मा हाइटीमा गएको भूकम्प पूर्व त्यहाँ ८,००,००० अपाङ्गता भएका व्यक्तिहरू थिए । सरकारी अनुमानअनुसार विपद्को कारण ३,००,००० घाइते भए । धेरैले दीर्घकालीन अपाङ्गताको अवस्थामा बाँच्नु परिरहेको छ । (४)

ह्याण्डीक्याप इन्टरनेशनलले पहुँचसम्बन्धी मुद्दामा जनचेतना जगाउन र विपद् व्यवस्थापनमा नागरिक समाजको क्षमता विकास गर्ने द्रुत प्रतिकार्य संयन्त्र परियोजनाको पहल गर्यो ।

भूकम्पको अनुभववाट सिकेर पूर्वतयारीमा सुधार गर्न विपद् तथा जोखिम व्यवस्थापन राष्ट्रिय प्रणाली (SNGRD, जसको हाइटिइन रेडक्रस पनि एउटा भाग हो)ले पहुँचलाई साइट एण्ड इभ्याकुएसन सेन्टर म्यानेजमेन्टसम्बन्धी राष्ट्रिय नीतिमा समावेश गर्न चाह्यो ।

पुहुँचको बातावरण बनाउने र मानिसहरूलाई सुरक्षित स्थानमा लैजाने पद्धति सम्बन्धमा ह्याण्डीक्याप इन्टरनेशनलले अपाङ्गता भएका व्यक्तिहरूको समावेशीकरणको लागि राज्य सचिवको कार्यालय (BSEIPH) को स्वीकृति र सहकार्यमा तालिम एवं प्राविधिक सिफारिस प्रदान गर्‍यो ।

राष्ट्रिय पूर्वतयारीसम्बन्धी दस्तावजेहरूमा पहुँचका सम्बन्धमा विशेष उल्लेख गरिनुले काम गर्नलाई सहज बनाएको छ । परिणामस्वरूप विपद् पूर्व मानिसहरूलाई सुरक्षित राख्न बनाएका केन्द्रहरू (Evacuation centers)लाई स्तर उन्नति गरी पहुँचसम्बन्धी उच्च मापदण्ड अपनाइयो र यसमा अपाङ्गता भएका व्यक्तिहरूले सञ्चालन गरेका संस्थाहरूको संलग्नता बलियो रह्यो ।

**तलको लिङ्क पनि हेर्नुहोला :**

1. SNGRD publication: Guide de Gestion des Abris d'Evacuation http://www.eshelter- ccmhaiti.info/jl/pdf/2013/Guide-Abris- Evacuation-2013-FR.pdf
2. BSEIPH publications: http://www.seiph.gouv.ht/category/ p

(४) Pan American Health Organization. 2010 Earthquake in Haiti: PAHO/WHO Situation Report on Health Activities Post Earth-quake.

## क.१.२. VCA, PASSA र अन्य सहभागितासम्बन्धी लेखाजोखा उपकरण

वल्नरएविलिटि कपासिटी अनालिसिस (VCA) र पार्टीसिपेटरी एप्रोच टु सेल्फ सेल्टर अवेयरनेस (PASSA ) रेडक्रस सोसाइटी र रेडक्रिसेन्ट सोसाइटीले बारम्बार उपयोग गर्ने उपकरण हुन् ।
उल्लेखित प्रत्येकमा सहभागितासम्बन्धी उपकरण र अवधारणाको समूह समावेश छन् । यस उपकरणले समुदायसँगै कर्मचारी र स्वयंसेवकलाई सक्षम बनाउँछ र सामान्य अवस्था र सेल्टरसँग सम्बन्धित विषयमा खतराको अवस्था, जोखिमको मात्रा, क्षमता र प्राथमिकताहरू पहिचान गर्छ । तल भिसीए र पीएएसएसएलाई अपाङ्गता समावेशी कसरी बनाउने भन्ने सम्बन्धमा खास सिफारिस प्राप्त गर्न सक्नुहुनेछ ।

ती सिफारिस अन्य समुदायमा आधारित लेखाजोखा र अवधारणामा पनि प्रयोग हुनसक्छन् । जस्तैः समुदायमा आधारित स्वास्थ्य र प्राथमिक उपचार (CBHAF) । यस खण्डको अन्त्यमा रहेको Further Reading अन्तर्गत PASSA र VCA कसरी गर्ने भन्ने बारेमा सामान्य मार्गदर्शन पाउनुहुनेछ ।

**१:समावेशी योजना निर्माण** **क१.२.१**

समुदायसँगको छलफलको सुरूवातदेखि अपाङ्गता भएका व्यक्ति र उनीहरूका सवालहरूलाई समावेश गराउन स्पष्ट प्रतिवद्धता जनाउनुपर्दछ । अपाङ्गता भएका व्यक्तिको क्षमतालाई सहयोग पुर्याउनु अवरोध र जोखिमको मात्रालाई घटाउने मुख्य तत्व हो ।

**२: सक्रिय सहभागिता** **क१.२.२**

VSCA र PASSA प्रक्रियामा अपाङ्गता भएका व्यक्तिका संस्था र स्वावलम्बी समूहलाई संलग्न गर्नु पर्दछ । उनीहरूले सूचनामा सहयोग गर्न, अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागिताको लागि उत्प्रेरित गर्न र महत्वपूर्ण सुझाव दिन सक्छन् ।

(५) Several of these recommendations have been inspired by the Handicap International publication *Disability Inclusive Community Based Disaster Risk Management: A toolkit for practice in South Asia* (2012).

**३: तालिम** **क१.२.३**

स्वयंसेवक र कर्मचारीहरूका लागि तालिममा अपाङ्गतासम्बन्धी सवाल समावेश गर्नुहोस् ।

मुख्य सन्देशः:

⇒ आकस्मिकताको असरलाई बुझ्न अपाङ्गता भएका व्यक्तिहरूसँग प्रत्यक्ष कुराकानी गर्नुहोस् ।

⇒ विभिन्न ढाँचा र माध्यमको प्रयोग गरी सरल, स्पष्ट र सामञ्जस्यपूर्ण सन्देश प्रवाह गर्नुहोस् ।

⇒ समुदायमा अपाङ्गता भएका व्यक्तिहरूको सामाजिक अवस्थाको बारेमा बुझ्नुहोस् ।

लेखाजोखालाई पूर्णरूपमा सहभागितामूलक बनाउन पर्याप्त समय दिनुहोस् । बहु ढाँचामा सूचना तयार गर्न, पहुँचसहितको बैठक बस्ने स्थान पाउन, यातायात व्यवस्था गर्न, घरघरमा पुग्न र अपाङ्गता सवालमा कर्मचारीलाई तालिम दिन केही बढी समय लाग्न सक्छ ।

**४: लेखाजोखा उपकरण** **क१२४**

प्रश्नावली र लेखाजोखा उपकरणलाई अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँचयुक्त बनाउने र अपाङ्गतासम्बन्धी तथा अवरोधसम्बन्धी प्रश्नहरू समावेश गर्ने कार्य गर्नुहोस् ।

**उदाहरण :**

⇒ समुदायमा वा बसोबास क्षेत्रमा अवरोध पहिचान गर्न गरिने भ्रमण (transect walk ) मा अपाङ्गता भएका व्यक्तिहरुलाई साथमा लिनुपर्दछ ।

⇒ कुनै खास वर्गको अलग्गै समूह बनाउनुको सट्टा समुदायका विविध सदस्यहरू (बालबालिका, ज्येष्ठ नागरिक, गर्भवति महिला, अपाङ्गता भएका व्यक्ति आदि )को समूह बनाउनुपर्दछ । यसले अवरोध र अनुभवलाई एकअर्कामा आदानप्रदान गर्न सक्छन् ।

⇒ अन्तर्वार्ताको बेला विभिन्न प्रकारका अपाङ्गता पहिचान गर्न र अपाङ्गता भएका व्यक्तिहरूले सेल्टर र बसोबास गरिरहेका स्थानहरूमा दैनिक कामहरू गर्दा अनुभव गरिरहेका अवरोध थाहा पाउन प्रश्नहरू सोध्नु होस् ।

**५ सूचना** **क१.२.५**

पहुँचयुक्त स्थानमा आयोजना गरिएको सूचना र सचेतनासँग सम्बन्धित बैठकमा अपाङ्गता भएका व्यक्तिहरूलाई बोलाइने (सही समयमा) कुरा सुनिश्चित गर्नुहोस् ।

**६ गृह भेट/घरदैलो** **क१.२.६**

घरबाट बाहिर निस्कन नसक्ने अवस्थामा रहेका अपाङ्गता भएका व्यक्तिलाई उनीहरूका घरमै गएर भेट गर्नुहोस् । यसबाट उनीहरूका आवश्यकता लेखाजोखाको तथ्याङ्कमा प्रतिविम्बित हुन सक्नेछ ।

**७ प्रतिवेदन** **क१.२.७**

VCA र PASSA को प्रतिवेदनमा अपाङ्गताको मुद्दालाई स्पष्ट रूपमा देखाउनुहोस् । अपाङ्गता भएका व्यक्तिहरूले समुदायमा अनुभव गर्ने अवरोध र सामना गर्ने संयन्त्रमा विशेष ध्यान केन्द्रित गर्नुहोस् । अवरोध कम गर्न र अवरोधको सामान गर्ने संयन्त्रलाई गर्ने सहयोग पुर्याउने खालका कार्य सिफारिस गर्नुहोस् ।

**८ तथ्यलाई प्रस्तुत गर्ने** **क१.२.८**

सबैका लागि पहुँचयुक्त हुने ढाँचामा लेखाजोखाबाट प्राप्त तथ्यलाई समुदायमा प्रस्तुत गर्नुहोस् । लेखाजोखाको मूल्याङ्कनमा पनि अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागी गराउनुहोस् ।

VCA र PASSA गर्दा सुरूमा र अन्त्यमा पेश गरिएका प्रश्नहरू समुदायको अपाङ्गतालाई हेर्ने दृष्टिकोणमा कुनै परिवर्तन आएको छ कि भनेर मापन गर्ने उपकरण हुनसक्छ ।

अपाङ्गता भएका व्यक्तिहरूको जोखिमको अवस्था लेखाजोखा गर्दा सेल्टर र बसोबाससँग वा भौतिक पहुँचसँग असम्बन्धित सवालहरू पनि पत्ता लगाउनुहुनेछ । यस्ता सवालहरूको पनि फलोअप गर्न, सम्बोधन गर्न र प्रेषण सेवा दिन तयार रहनुहोस् ।

**क.१.२. घटना अध्ययन**

भारतको उडिसा राज्यमा बंगालको खाडी क्षेत्र सामुन्द्रिक आँधी र बाढीको कारणले जोखिमको अवस्थामा छ । यस क्षेत्रमा विपद् सेल्टरमा गरिएको पहुँचसम्बन्धी लेखापरीक्षणमा ह्याण्डीक्याप इन्टरनेशनलले VCA, पूर्वतयारी योजना निर्माण र विपद्का अवस्थाको नक्कली अभ्यास (Mock Drills) मा अपाङ्गता भएका व्यक्तिहरूलाई धेरै मात्रामा वेवास्ता गरिएको तथा यस्ता काममा उनीहरूले योगदान गर्न सक्छन् भन्ने बारेमा कसैको पनि सोच नरहेको तथ्य पत्ता लगायो ।

अक्टुवर सन् २०११ मा भद्राक जिल्लाको नउगाउँमा कम्युनिटी साइक्लोन सेल्टर म्यानेजमेन्ट एण्ड मेन्टिनेन्स कमिटीको समेतको संलग्नतामा VCA गरिएको थियो ।

सामुदायिक कार्यकर्ताहरूले अपाङ्गता भएका व्यक्ति र तिनका परिवारहरूलाई घरघरमै गएर परियोजनाका बारेमा बताए । पहिलोपटक अपाङ्गता भएका व्यक्तिहरूको सहभागिताको लागि उनीहरूलाई CSMMC द्वारा औपचारिक निमन्त्रणा दिइयो जसले अपाङ्गता भएका व्यक्तिहरूलाई यस प्रक्रियामा समावेश हुन निकै उत्साहित गर्‍यो ।

VCA को अभ्यास गरी अन्य व्यक्तिहरू लगायत अपाङ्गता भएका व्यक्तिहरूबाट पनि पर्याप्त सुझावहरू सङ्कलन गरियो । यसमा सहजकर्ताहरूले देख्नमा समस्या हुने व्यक्तिहरूको लागि चम्किलो रङ्ग र वस्तुहरू प्रयोग गरे । किनकी उनीहरूले यसलाई हेर्न र अनुभूत गर्न सकून तथा यसैगरी सुन्नमा समस्या हुनेहरूका लागि ठूलो आवाजमा छलफल सञ्चालन गरे । यसबाट विपद्बाट समुदायमा रहेका विविध समूहहरू कसरी प्रभावित हुने रहेछन् भन्नेबारेमा समुदायले उपयोगी जानकारी हासिल गरे ।

साभार : *Disability Inclusive Community Based Disaster Risk Management: A toolkit for practice in South Asia*, Handicap International (2012).

## क.१.३. लक्षित पूर्वचेतावनी प्रणाली र सुरक्षित स्थानमा लैजाने

राष्ट्रिय सोसाइटीले पूर्व सूचना/चेतावनी प्रणाली लगायत प्रतिकार्यलाई सक्रिय गराउन प्रयोग गर्ने योजना गरेका सबै प्रक्रिया अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा हुनुपर्छ ।
समावेशी पूर्व चेतावनी/सूचना प्रणालीले विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूका सञ्चारसम्बन्धी आवश्यकतालाई ध्यान पुर्‍याउने गर्दछ । पूर्व सूचना सन्देशहरूमा काम गर्नको लागि यसले अपाङ्गता भएका व्यक्तिहरूको क्षमतालाई पनि विचार पुर्‍याउँछ । (७)

VCA/PASSA र अवरोध, सेवामा पहुँच र समुदायमा अपाङ्गता भएका व्यक्तिको क्षमताको बारेमा गरेको घरधुरी सर्भेक्षणका तथ्यलाई उल्लेख गर्नुहोस् ।

**१: समावेशी योजना** **क१.३.१**

पूर्व चेतावनी/सूचना प्रणालीको व्यवस्थापन र योजना बनाउने जिम्मेवार समूहमा अपाङ्गता भएका व्यक्तिहरू पनि संलग्न छन् भन्ने सुनिश्चित गर्नुहोस् ।

**२: सक्रिय सहभागिता** **क१.३.२**

जोखिमको अनुगमन गर्दा अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागी गराउनुहोस् । जस्तै : वर्षा र पानीको तह मापन गर्ने वा रेडियोका रिपोर्टहरू सुन्ने ।

**३: चेतावनी सन्देशमा पहुँच** **क१.३.३**

उपलब्ध सूचना माध्यमहरूको समीक्षा गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिहरूसँग उनीहरूले उपयुक्त ठान्ने सञ्चार साधनका बारेमा छलफल गरी सूचनामा पहुँच बढाउनुहोस् । (हेर्नुहोस् ग१.१)

(७) For more detail, see the *Community Early Warning System: Guiding Principles* by IFRC, e.g. Guiding Principle 12: Target and reach disadvantaged and vulnerable groups (http://www.ifrc.org/PageFiles/103323/1227800-IFRCCEWS-Guiding-Principles-EN.pdf).

**४ : सुरक्षित स्थानमा लैजाने योजना** **क१.३.४**

हरेक व्यक्तिको गणना गर्न समुदाय र अपाङ्गता भएका व्यक्तिहरूको संस्थाहरूसँग सञ्चारको एउटा शृङ्खला स्थापित गर्नुहोस् । सहयोगको आवश्यकता पर्ने व्यक्तिहरूलाई सुरक्षित स्थानमा लैजाने योजना बनाउनुहोस् ।





उदाहरणको लागि श्रवण समस्या हुने व्यक्तिले घरदैलोमै गएर दिइने बोलीरहीत सन्देश (जस्तैः दृश्य सङ्केत) लिनसक्छन् । आवागमनमा समस्या हुने व्यक्तिले स्थानीय उद्धार टोलीका सदस्यहरूबाट प्राथमिकताका आधारमा सुरक्षित स्थानमा सार्ने सहयोग प्राप्त गर्न सक्छन् ।

खास गरी बाढीको जोखिम भएको क्षेत्रमा मानिसहरूलाई सुरक्षित स्थानमा लैजाने योजनामा अपाङ्गता भएका व्यक्तिहरू एकठाउँबाट अर्को ठाँउमा कसरी आवागमन गर्छन् भन्ने कुरामा ध्यान दिनुपर्छ । केही अवस्थामा, जहाँ खम्बा गाडेर परम्परागत सेल्टरहरू बनाइन्छ, आवागमनमा समस्या हुने अपाङ्गता भएका व्यक्तिका लागि कुनै संरचना छोडन वा प्रवेश गर्न घिर्नी प्रणालीको उपयोग गरिन्छ ।



**५ : तालिम** **क१.३.५**

कसरी पूर्व चेतावनी\सूचना प्रणालीले काम गर्छ, चेतावनी सङ्केत भनेका के हुन् र के कस्ता कामहरू गर्नुपर्छ ? भन्ने विषयमा दिइने तालिममा अपाङ्गता भएका व्यक्ति, उनीहरूलाई हेरचाह गर्ने व्यक्ति र परिवारका सदस्यलाई संलग्न गरिन्छ भन्ने सुनिश्चित गर्नुपर्दछ ।

**६: समावेशी सिमुलेसन अभ्यास** **क१.३.६**

विपद्सम्बन्धी सिमुलेसन अभ्यासहरू र ड्रिलहरूमा अपाङ्गता भएका व्यक्तिहरूलाई पनि सहभागी गराउनुहोस् । सबैलाई प्रभावित वा विपद्बाट पीडित व्यक्तिको भूमिकामा मात्र नभएर विभिन्न प्रकारका भूमिका निर्वाह गर्ने अवसर दिनुहोस् ।

**क.१.३. घटना अध्ययन**

विपद्को अवस्थामा महत्वपूर्ण सूचना प्रायः श्रब्य माध्यमबाट प्रदान गरिन्छ। जापानमा सन् २०११ को मार्चमा आएको विनाशकारी भूकम्प र सुनामी पश्चात रेडियो प्रशारण तथा सवारी साधनमा लाउडस्पीकर राखेर प्रभावित जनतामा सूचना पुर्‍याइएको थियो।

बहिरा व्यक्तिहरूलाई सुन्नमा समस्या हुन्थ्यो र यसरी दिइएका सूचना उनीहरूका लागि पहुँचमा भएनन्। त्यस्तो बेला यसबारेमा बताइदिन र हेरचाह गर्ने व्यक्ति भएनन् भने बौद्धिक अपाङ्गता भएका मानिसहरू यो अवसरबाट बञ्चित हुन्थे। आवागमनमा कठिनाइ हुने अपाङ्गता भएका व्यक्तिहरू भौतिक अवरोधको कारणले सहयोगको अभावमा सूचनामा भनेअनुसार गर्न असमर्थ भए। विकिरणको खतराको कारणले पनि मानिसहरूलाई घरभित्रै झ्यालढोका बन्द गरेर बसिरहन बाध्य बनायो जसका कारण उनीहरूले आवाजबाट दिइएका सूचनाहरू सुन्न सकेनन्।

विपद्को तुरून्त पश्चात PLUS Voice नामक एउटा निजी कम्पनीले भिडियोफोन वा स्मार्टफोनमार्फत ईवेट, मियागी र फुकुसीमा भन्ने स्थानमा बसोबास गर्नेहरूका लागि निःशुल्क साङ्केतिक भाषा सेवा प्रदान गर्‍यो। यस दूरसञ्चार सहयोगको माध्यमबाट सुन्न समस्या हुने अपाङ्गता भएका व्यक्तिहरूलाई सूचना र विपद्सम्बन्धी चेतावनीमा पहुँच पुर्‍याउन नयाँ तरिका उपयोग गरियो।

## क.१.४ पहुँचमा आकस्मिक इभ्याकुएसन सेल्टर

अमेरिकी अपाङ्गतासम्बन्धी ऐन : " विपद् सेल्टरको लागि रूजु सूची"

"विपद् सेल्टरको उच्चस्तरको कार्ययोजनामा मुख्य रूपमा पर्याप्त खाना, पानी र ओढ्नेसहितका वस्तुको राम्रो भण्डारणलाई सुनिश्चित गर्नुपर्दछ । योजनामा यस्ता सेल्टरहरू अपाङ्गता भएका मानिसहरूका लागि पनि पहुँचयुक्त छन् भन्ने कुरा सुनिश्चित हुनुपर्दछ ।"

विपदमा बनाइने सेल्टरहरू विभिन्न रूपमा आउँछन् : केही अवस्थाहरूमा तिनीहरू पहिले नै कुनै खास प्रकारको खतरा जस्तै आँधीसँग लड्न सक्ने गरी बनाइन्छ र अन्य अवस्थामा ती विपद्का अवस्थामा मात्र विद्यालय वा सामुदायिक केन्द्रहरू जस्ता साझा सेल्टरहरूमा परिणत गरिन्छन् । विनापहुँचका सेल्टरहरूले अपाङ्गता भएका व्यक्तिहरूका संरक्षण, आत्मसम्मान र सहयोग पाउने अधिकारलाई अप्ठ्यारोमा पार्छ । अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धिकाअनुसार विद्यालय र सार्वजनिक भवनहरूमा पहुँच पुर्याउने कुरा पूर्वतयारीका उपायमात्र भन्दा केही माथिको कुरा हो । (अनुसूची ३, पेज १५४ हेर्नुहोस्)

**१: सेल्टर नक्शाङ्कन गर्नुहोस्** **क१.४.१**

विपद्का अवस्थामा मानिसहरूलाई सुरक्षित राख्न बनाइएका सेल्टरहरूका लागि पहिचान गरिएका सुविधाको नक्शाङ्कन गर्नुहोस् ।

**२: अवरोधहरू पहिचान गर्नुहोस्** **क१.४.२**

अपाङ्गता भएका व्यक्तिहरूले सामना गर्ने अवरोध पहिचान गर्न अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई संलग्न गराएर भ्रमण गर्नुहोस् ।

सामान्यतया स्थायी अनुकूलता सार्वजनिक भवनहरूका लागि सिफारिस गरिन्छ । यस्तो सम्भव छैन भने विपद्का अवस्थामा अस्थायी समाधानको बारेमा पनि विचार गर्नुहोस् । (जस्तैः यताउता लैजान सकिने र्‍याम्प र शौचालय)

**३: पहुँच बनाउने** **क१.४.३**

मानिसलाई सुरक्षित स्थानमा राख्न बनाइएका सेल्टरहरूलाई आवश्यक उपाय अपनाइ पहुँचयुक्त बनाउनुहोस् (ख.२.३ हेर्नुहोस्) । बाँकीको लागि उपयुक्त बैकल्पिक उपाय अपनाउनुहोस् ।

बाढीको जोखिम भएका क्षेत्रमा भूइँतला सुरक्षित छ कि छैन विचार गर्नुहोस् । छैन भने माथिल्लो तहमा अवरोधमुक्त पहुँच जरूरी हुन्छ ।

**४: आरक्षित स्थान** **क१.४.४**

आवागमनमा समस्या हुने र दृष्टिसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरूका लागि अवरोधमुक्त हुनेगरी अलग्गै शौचालय तथा सरसफाइ सुविधासहित भूइँतलामा स्थान आरक्षित गर्नुहोस् ।

**५: जगेडा** **क१.४.५**

आकस्मिक सेल्टरहरूमा सहायक सामग्रीको जगेडा गर्नुहोस् । जस्तैः आकस्मिक ह्वीलचियर, बैसाखी, हिँड्न प्रयोग गरिने फ्रेम, सेतोछडी, यताउता लैजान सकिने शौचालय । यस्ता वस्तुको छनौटको लागि स्थानीय अपाङ्गता भएका व्यक्तिका संस्थासँग परामर्श गर्नुहोस् ।

**६: सूचना केन्द्र** **क१.४.६**

अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग र सूचना उपलब्ध गराउन सूचना केन्द्रसम्बन्धी योजना बनाउनुहोस् (अपाङ्गता डेस्क, ख.१.१.१० हेर्नुहोस्) । समुदायलाई सचेत तुल्याउनुहोस् ।

**७: स्थलगत भ्रमण** **क१.४.७**

पूर्वतयारीका बेला अपाङ्गता भएका व्यक्ति र उनीहरूको हेरचाह गर्नेहरूका लागि नजिकका सेल्टरहरूको भ्रमण गराउनुहोस् । यसबाट उनीहरूलाई अन्य स्थान र तिनीहरूको अवस्थाका बारेमा थाहा पाउन सहज हुनेछ ।

अपाङ्गता भएका व्यक्तिहरूलाई सेवा दिने सङ्घसंस्थाका परिसरलाई विपद्को बेलामा मानिसहरूलाई राख्ने सुरक्षित स्थानका रूपमा उपयोग गरिनुहुँदैन । बरू यसको सट्टा पूर्वतयारीमा वा आकस्मिक अवस्थाभर परिचालन गर्न त्यस्ता संस्थाहरूको क्षमता विकास कसरी गर्ने भन्ने विचार गर्नुपर्छ ।

**क.१.४. अवस्था अध्ययन**

सन् १९९१ मा आएको एउटा आँधीपश्चात अलेक्दिया (बंगलादेशको समुन्द्र किनारको एउटा गाउँ)मा आकस्मिक सेल्टर बनाइयो । यस आँधीले १० जना अपाङ्गता भएका व्यक्ति लगायत १२० जनाको ज्यान लिएको थियो ।

सन् २०११ मा ह्याण्डीक्याप इन्टरनेशनलले पहुँचसम्बन्धी लेखापरीक्षण गर्‍यो जसले सेल्टरहरू पहुँचमा नभएको देखियो । बाटोघाटो एकदमै हिलो थियो र सेल्टर राखिएको स्थलसम्म जाने ठाउँमा ह्वीलचियर प्रयोग गर्ने अपाङ्गता भएका व्यक्तिहरूका लागि अवरोध थिए । भवनको भूईँ र पहिलो तलाको बीचमा कुनै र्‍याम्प थिएन । शौचालयका ढोका ह्वीलचियर प्रयोगकर्ताका लागि निकै साँघुरा थिए र भित्र कुनै समात्ने बार थिएनन् । स्वनिर्देशित हुनलाई कुनै सङ्केत राखिएको पाइएन र विजुलिबत्तीका स्विचहरू ह्वीलचियर प्रयोगकर्ताका लागि निकै अग्लो स्थानमा थिए ।

तथ्यहरूको आधारमा ह्याण्डिक्याप इन्टरनेशनल र यसको साझेदार योङ्ग पावर इन सोसियल एक्सनले प्रवेशद्वारमा रहेको अवरोध हटाउन भूईँतलासम्म पुग्न समात्ने बारसहितको र्‍याम्पको निर्माण गरे । शौचालयमा प्रवेश गर्ने ढोकाहरूलाई चौडा गरियो । शौचालय मेच, समात्ने बार र पहुँचसहितको पानी फ्लस गर्ने प्रणाली जडान गरियो ।

अपाङ्गता भएका व्यक्तिहरूलाई समावेश गर्ने साइक्लोन सेल्टर म्यानेजमेन्ट कमिटीले के उपाय लगाउँदा उपयुक्त हुन्छ भन्ने विषयमा निर्णय गर्न मद्दत गर्‍यो । पहिले अपाङ्गता भएका व्यक्तिहरूले यी सेल्टरहरूलाई वेवास्ता गरेका थिए अथवा पहुँचको अभावले अन्तिम समयमा मात्र उनीहरूलाई सुरक्षित स्थानमा लगिएको थियो । नक्कली अभ्यास र यस परिवर्तनलाई हेर्नका लागि अपाङ्गता भएका व्यक्तिहरूले गरेको भ्रमणले पनि जनचेतनामा अभिवृद्धि गर्न तथा विपद्को बेलामा सेल्टरको उपयोग गर्न आत्मविश्वासको विकास गर्न सहयोग गर्‍यो ।

## थप अध्ययनको लागि

CBM (2012), *Inclusion Made Easy: A quick program guide to disability in development.* http://www.cbm.org/Inclusion-Made-Easy-329091.php
ECHO, HI (2009), *Mainstreaming disability into disaster risk reduction: a training manual.* http://preventionweb.net/go/24772
Handicap International (2012), *Disability Inclusive Community Based Disaster Risk Management: A toolkit for practice in South Asia.* http://disabilityindrr.org/resourcespage/
Nicaraguan Red Cross (2012), *Inclusion of persons with disabilities in disaster preparedness and risk reduction.* http://www.alnap.org/pool/ files/disabilities-in-drr.pdf

## VCA र PASSA को लागि

IFRC (2007), *What is VCA? An introduction to vulnerability and capacity assessment.* http://www.ifrc.org/Global/Publications/ disasters/vca/whats-vca-en.pdf
IFRC (2007), *How to do a VCA: A practical step-by-step guide for Red Cross Red Crescent staff and volunteers.* http://www.ifrc.org/Global/ Publications/disasters/vca/how-to-do-vca-en.pdf
IFRC (2007), *VCA toolbox & reference sheets.* http://www.ifrc.org/ Global/Publications/disasters/vca/vca-toolbox-en.pdf
IFRC (2011), *PASSA: Participatory Approach for Safe Shelter Awareness* https://www.ifrc.org/PageFiles/95526/publications/305400- PASSA%20manual-EN-LR.pdf

## पूर्व चेतावनी प्रणालीको लागि

IFRC (2012), *Community Early Warning System: Guiding Principles.* http://www.ifrc.org/PageFiles/103323/1227800-IFRC-CEWSGuiding- Principles-EN.pdf
IFRC (2013), *Public awareness and public education for disaster risk reduction: a guide.* http://www.ifrc.org/Global/Publications/ disasters/reducing_risks/302200-Public-awareness-DDRguide-EN.pdf

## रूजुसूची क१: पूर्वतयारी

⇒ विपद् जोखिम न्यूनीकरण गतिविधि वा पूर्वतयारीका सुरूदेखि नै अपाङ्गतालाई समावेश गराउँदै लगिएको छ ।

⇒ पहुँचयुक्त सेल्टर लगायत अपाङ्गताका सवालसँग सम्बन्धित संस्थागत अनुभव र क्षमता पर्याप्त बटुलिएको छ ।

⇒ पूर्वतयारीका गतिविधिमा राष्ट्रिय सोसाइटीहरू, अधिकारीहरू र अन्य सरोकारवालासँगै अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई पनि प्रतिनिधित्व गराइएको छ ।

⇒ अपाङ्गताको परिप्रेक्ष्यबाट विद्यमान सेल्टर र बसोबास व्यवस्थापन योजनामा स्थानीय अपाङ्गता भएका व्यक्तिहरूका संस्थाहरूलाई पनि भाग लिन बोलाइएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई योजना निर्माणका कामहरूको बारेमा सूचित (पहुँचयुक्त बहुढाँचामा सूचनाहरू उपलब्ध गराइ )गरिन्छ र भाग लिन बोलाइन्छ ।

⇒ सेल्टर र बसोबाससम्बन्धी पूर्वतयारी योजना निर्माणमा अपाङ्गताका सवालमा सार्वजनिक जनचेतना अभियान पनि समेटिएको छ ।

⇒ पहुँचसम्बन्धी राष्ट्रिय कानुन र निर्देशिकाहरू उपलब्ध छन् भने तिनलाई पूर्वतयारीको उपायको लागि सुरूवातको बिन्दुका रूपमा उपयोग गरिन्छ ।

⇒ लेखाजोखा उपकरण तथा फारामहरू अध्यावधिक गरिएका छन् र अपाङ्गतालाई समेटिएको छ ।

⇒ स्थानीय अपाङ्गता भएका व्यक्तिका संस्थाहरूले अपाङ्गता भएका व्यक्तिहरूलाई समुदायमा परिचालन गर्न र तथ्याङ्क सङ्कलन गर्न मद्दत गर्छन् ।

⇒ अपाङ्गताको सवालहरू VCA र PASSA का प्रतिवेदनहरूमा देखिने गरी प्रस्तुत गरिएका छन् र ती प्रतिवेदनहरू पहुँचसहितका ढाँचामा छन् ।

⇒ आकस्मिक अवस्थामा अपाङ्गता भएका व्यक्तिहरूलाई सूचना गर्ने, पत्ता लगाउने, सहयोग गर्ने जिम्मेवारी र तरिका पहिचान गरिएका छन् ।

⇒ चेतावनी पूर्व र सुरक्षित स्थानमा लैजाने विषयमा समुदायका सबै सदस्यहरू संलग्न छन् भन्ने सुनिश्चित गर्न सञ्चारको एउटा शृङ्खला स्थापित गरिएको छ ।

⇒ सुरक्षित स्थानमा बनाइएका आकस्मिक सेल्टरहरू र सुरक्षित स्थानमा लैजाने मार्गलाई तिनको पहुँचको स्तरअनुसार नक्शाङ्कन गरिएको छ ।

⇒ स्थायी वा अस्थायी सामाधान अपनाइ सेल्टरहरूलाई पहुँचयुक्त बनाउन तथा महिला र पुरूषलाई अलग्गै पहुँचका सुविधा दिने उपाय अपनाइएका छन् ।

⇒ अपाङ्गता भएका व्यक्तिहरू सुरक्षित स्थानमा बनाइएका सेल्टर, ती सेल्टर रहेको ठाउँ र यसको लेआउटको बारेमा परिचित छन् । सुरक्षित स्थानमा सार्ने अभ्यासमा सहभागी भएका छन् ।

आकस्मिक अवस्थामा सूचना र सेवाको सीमित पहुँच नै अपाङ्गता भएका व्यक्तिहरूले सामना गरिरहेका मुख्य अवरोधमध्ये हुन् ।

# क.२ आकस्मिक प्रतिकार्य

साभार : स्वास्थ्यको लागि अपाङ्गता र आकस्मिक जोखिम व्यवस्थापन
"अपाङ्गता भएका व्यक्तिहरूले अक्सर आकस्मिकताको अवस्था पूर्व, त्यसको अवधिभर र त्यसको धेरैपछिसम्म उपयुक्त [...] सेल्टरहरूमा उनीहरूको पहुँचलाई अवरूद्ध पार्ने अवरोधको सामना गर्छन् । सेल्टर र बसोबास व्यवस्था अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा छन् भनी सुनिश्चित गर्न उपयुक्त डिजाइन र योजना बनाउनु आवश्यक छ" CBM, IFRC, IOM, UNICEF, UNISDR, WHO (*2013*)

प्राकृतिक विपद्ले अपाङ्गता भएका व्यक्तिहरूको अवस्थासँग सामना गर्ने सक्ने संयन्त्रलाई बाधा गर्ने नयाँ अवरोध सिर्जना गर्छ । पूर्वतयारी समावेशी भएन भने र प्रतिकार्यसँग सम्बन्धित क्रियाकलापले अपाङ्गता भएका व्यक्तिहरूलाई लक्षित गर्न सकेन भने उनीहरूमाथि जोखिम तथा खतराको तहमा बृद्धि हुनेछ ।

सेल्टर सबैको लागि आधारभूत आवश्यकता हो । आकस्मिक सेल्टर र बसोबाससँग सम्बन्धित क्रियाकलापमा अपाङ्गता भएका व्यक्तिहरूलाई लक्षित गर्दा विपद्बाट प्रभावित सबै जनसंख्यालाई बचाउन महत्वपूर्ण भूमिका निर्वाह हुन्छ । यस खण्डमा प्रस्तुत तलका अध्यायले यसलाई कसरी हासिल गर्ने भनी आवश्यक सिफारिस गर्नेछ ।

**यस अध्यायमा समावेश गरिएका विषयवस्तु**

## क.२.१ आकस्मिकता समन्वयमा अपाङ्गतासम्बन्धी जनचेतना

अपाङ्गता भएका व्यक्तिहरूका लागि आकस्मिक अवस्थामा केही गम्भीर परिणाम हुन्छ । नयाँ भौतिक अवरोध सिर्जना हुन्छ र सहयोग गर्ने सञ्जालहरू अवरूद्ध हुन्छन् । सबैका लागि र खास गरेर दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिहरूलाई सूचनामा पहुँच कठिन हुन्छ । राहत सेवामा अक्सर अपाङ्गता भएका व्यक्तिहरूलाई ध्यान दिइएको हुँदैन । उनीहरू आधारभूत आवश्यकताका लागि संघर्ष गर्छन् र बाह्य सहयोगमा बढी निर्भर रहन्छन् ।

समन्वय संयन्त्रले अपाङ्गता सम्बन्धित योजना र कामको लागि भेटघाट तथा छलफल गर्न विभिन्न क्षेत्रका व्यक्तिहरूलाई सक्रिय गराउँछ । यस्तो संयन्त्रको प्रकार आकस्मिकताको स्थान र स्तरमा निर्भर गर्छ ।

ठूलो स्तरमा भएको आकस्मिकताको अवस्थामा धेरै कार्यकर्ताहरूका अपाङ्गताका सवालमा विभिन्न जिम्मेवारी हुनसक्छन् । यसका लागि स्पष्ट सेवा, सर्तसहित अन्तरक्षेत्रीय अपाङ्गता समन्वय समूह स्थापना गरिनुपर्छ ।

सानो स्तरको आकस्मिकताको अवस्थामा प्राय: गरेर विभिन्न जिम्मेवार क्षेत्र र व्यक्तिहरूको जिम्मेवारीमा अपाङ्गता एकीकृत अंगको रूपमा नै रहन्छ । यसको लागि हरेक क्षेत्रमा र क्लष्टरमा अपाङ्गता सम्पर्क सूत्र स्थापना गरिनुपर्छ । (१)

**१: समग्र स्थिति (Overview)** **क२.१.१**

उपलब्ध सूचनाको स्रोतलाई उपयोग गरी आकस्मिकको स्तर र प्रकारको बारेमा एउटा समग्र दृश्य प्राप्त गर्नुहोस् (जस्तै प्रत्यक्षदर्शीका भनाइ, फोन सम्पर्क, सञ्चार माध्यमका रिपोर्टहरू, भूउपग्रहका तस्विरहरू)

अपाङ्गता भएका व्यक्तिहरूको सन्दर्भमा पूर्वतयारीको बारेमा राम्ररी बुझ्नुहोस् । केही देशहरूमा अपाङ्गतासम्बन्धी जिम्मेवारी स्वास्थ्य मन्त्रालयमा रहन्छ भने केहीमा समाजकल्याण मन्त्रालयमा ।

(१) साभार : CBM, IFRC, IOM, UNICEF, UNISDR, WHO: *Guidance Note on Disability and Emergency Risk Management for Health* (2013)

**२: मुख्य सूचनादाता** **क२.१ .२**

मुख्य सरोकारवाला अपाङ्गता भएका व्यक्तिका संस्थासँग सम्पर्क स्थापित गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिका संस्था छैनन् भने अपाङ्गताको बारेमा सूचना दिने अरू सूचनादाता पहिचान गर्नुहोस् ।

एकदमै सही सूचना प्राप्त नभएसम्मका लागि प्रभावित कुल जनसंख्याको १५ प्रतिशत मानिस अपाङ्गता भएका व्यक्ति छन् भन्ने मान्नुहोस् (२) र यसलाई विपद् राहत आकस्मिक कोष (DREF ) तथा विभिन्न अपिल, प्रतिकार्य रणनीति र बजेटमा ध्यान दिनुहोस् ।

**३: अपाङ्गतासम्बन्धी तथ्याङ्क** **क२.१.३**

प्रभावित क्षेत्रमा अपाङ्गता भएका व्यक्तिहरूको तथ्याङ्क लिने पहल गर्नुहोस् । विपद्भन्दा पहिले अपाङ्गतासम्बन्धी कुनै तथ्याङ्क छैन भने अपाङ्गता भएका व्यक्तिका संस्थासँग मिलेर लेखाजोखाको एउटा अङ्ग बनाउनुहोस् । अपाङ्गता समन्वय समूह वा सम्पर्क सूत्रमार्फत सूचना प्रवाह गर्नुहोस् । सूचनालाई सुरक्षित तरिकाले भण्डारण गर्नुहोस् ।



मानिसहरू उनीहरूका सूचनालाई तथ्याङ्क बैंकमा राख्न मञ्जुर छन् कि छैनन् भनी सोध्नुहोस् र यसलाई अध्यावधिक राखिन्छ भन्ने सुनिश्चित गर्नुहोस् । कुन कुन सूचनामा कसको कसको पहुँच हुनसक्छ भन्ने कुरा र सूचनाको दुरूपयोग नहुने कुरा सुनिश्चित गर्नुहोस् ।

**४: प्रतिच्छेदन** **क२.१.४**

सबै क्षेत्रको बृहत् र जनमुखी प्रतिकार्य होस् भन्ने सुनिश्चित गर्न अपाङ्गता सम्पर्क सूत्र र अन्य प्रसङ्गलाई सँगै जोड्नुहोस् (जस्तै लैङ्गिक, उमेर, प्रभावित मानिसप्रतिको जवाफदेही) ।

**५: समन्वय बैठक** **क२.१.५**

सेल्टर र बसोबास व्यवस्थापन समन्वय बैठकका एजेण्डामा अपाङ्गताको सवाल राख्नुहोस् र प्राविधिक निर्देशनसम्बन्धी दस्तावेजमा पहुँचसहितका डिजाइनका मापदण्ड समावेश गर्नुहोस् । अपाङ्गता समन्वय समूह तथा सम्पर्क सूत्रलाई पनि बैठकमा बोलाउनुहोस् र सुझावहरू लिनुहोस् ।

(२) UN World Health Organization (WHO): *World Report on Disability (2011)*

**६: तालिम** **क२.१.६**

कर्मचारी एवं स्वयंसेवकलाई व्यवहारिक उदाहरणसहित अपाङ्गता भएका व्यक्तिलाई कसरी सहयोग गर्ने तथा सेल्टर र बसोबासमा पहुँचको वातावरण बनाउने बारेमा तालिम दिनुहोस् ।

**७: प्रेषण सेवा** **क२.१.७**

अपाङ्गता भएका व्यक्तिहरूका संस्था, सरकार र अन्य संस्थाहरूसँग मिलेर कसले के काम कसरी कहाँ र कहिले गर्नसक्छन् भन्ने कुरा राम्रोसँग नक्शाङ्कन गरेर प्रभावकारी प्रेषण प्रणाली निर्माण गर्नुहोस् ।

**क.२.१. घटना अध्ययन**

सन् २०१३ को अन्त्यतिर फिलिपिन्समा हाइयान नाम गरेको सामुद्रिक आँधी आयो । आकस्मिक प्रतिकार्यको एउटा हिस्साको रूपमा प्रोटेक्सन क्लष्टरअन्तर्गत अपाङ्गता र ज्येष्ठ नागरिक कार्यदल गठन गरियो ।

विपद्बाट प्रभावित अपाङ्गता भएका व्यक्तिहरूको प्रारम्भिक प्रतिवेदन अपूर्ण थिए । अपाङ्गता र ज्येष्ठ नागरिक कार्यदलको पहिलो काम भनेको तथ्याङ्क सङ्कलन सामजस्यपूर्ण र उमेर लिङ्ग तथा अपाङ्गताअनुसार वर्गीकरण भएको सुनिश्चित गर्नु थियो । प्रेषण सेवाको लागि मार्ग निर्धारण गर्न स्वास्थ्य क्लष्टरसँगको साझेदारीमा अपाङ्गता भएका व्यक्तिहरूका लागि सेवाको नक्शाङ्कन गरियो ।

अपाङ्गता र ज्येष्ठ नागरिक कार्यदलको अर्को लक्ष मूलधारका संस्थाहरूका कामहरूमा अपाङ्गतालाई समावेश गराउन उनीहरूको क्षमता विकास गर्नु हो । यसअन्तर्गत तालिम र प्राविधिक सहयोग पर्छ । विभिन्न क्लष्टरहरूका रणनीतिक प्रतिकार्य योजनामा अपाङ्गता भएका व्यक्ति र ज्येष्ठ नागरिकहरूको समावेशीकरणसँग सम्बन्धित सूचकहरूलाई पनि समावेश गरियो ।

सोही प्रकारको अवधारणा अन्य क्षेत्रहरूमा पनि परीक्षण गरियो । खास गरेर पाकिस्तानमा जहाँ सन् २०१० को बाढीपश्चात अपाङ्गता र ज्येष्ठ नागरिक कार्यदल यसका सदस्यको रूपमा अरू १० वटा संस्थाहरू (राष्ट्रिय र अन्तर्राष्ट्रिय) भए (3) ।

3. A report and resource book from the ADTF in Pakistan was published in 2011. See http://www.cbm.org/article/downloads/54741/ADTF_Report.p

## क.२.२.आकस्मिक आवश्यकता मूल्याङ्कनमा समावेशीकरण

"द्रुत लेखाजोखा गर्दा आकस्मिकताको सुरूकै अवस्थामा नै कार्यक्रममा पर्याप्त प्रभाव पार्न सकिने गरी अपाङ्गतासम्बन्धी विस्तृत सूचना सङ्कलन नगरिएको हुनसक्छ । वास्तवमा अपाङ्गतासम्बन्धी प्रायः लेखाजोखा धेरै हप्ता लगाएर र अझ विपद् देखापरेको केही महिनासम्म नै गर्ने गरिन्छ ।" *CBM, IFRC, IOM, UNICEF, UNISDR, WHO (2013)*"

द्रुत लेखाजोखामा अपाङ्गताको समावेशीकरणसम्बन्धी प्रश्नावली समावेश गर्दा यसले अपाङ्गता भएका व्यक्तिका आवश्यकता कसरी पहिचान गर्ने र त्यसलाई कसरी सम्बोधन गर्ने भन्ने बुझाइमा सुधार गर्न मद्दत गर्छ ।

अपाङ्गता समावेशी आकस्मिक आवश्यकता मूल्याङ्कनको योजना निर्माण र कार्यान्वयनको लागि तल केही चरणको उल्लेख गरिन्छ जुन सेल्टर र बसोबाससँग केन्द्रित छ । यस पछाडिका पानाहरूमा हामी द्रुत लेखाजोखासँग सम्बन्धित सिफारिसमा केन्द्रित हुनेछौँ । अपाङ्गता समावेशी विस्तृत र निरन्तर लेखाजोखालाई क.३.२. मा समेटिएको छ ।

**१: तालिम** **क२.२.१**

अपाङ्गता भएका व्यक्तिहरूलाई सम्बोधन गर्न लेखाजोखासम्बन्धी कर्मचारीहरूलाई अपाङ्गताको सवालमा छिटोछरितो तालिम दिनुहोस् ।

**२: अपाङ्गतासम्बन्धी तथ्याङ्क** **क२.२.२**

विपदभन्दा पहिला गरिएको कुनै Vulnerability Capacity Assessment (VCA) लगायत माध्यामिक स्तरको तथ्याङ्कको समीक्षामा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई संलग्न गराउनुहोस् ।

(४) तीन प्रकारका लेखाजोखा (द्रुत, विस्तृत र निरन्तर)को लागि अरू थप थाहा पाउन *Guidelines for assessment in emergencies,* published by IFRC in 2008 अध्यन गर्नुहोस् ।

(५) यस दस्तावेजमा संलग्न तालिम सामग्री हेर्नुहोला ।

**३: लेखाजोखा उपकरण** **क२.२.३**

प्रश्नावली र लेखाजोखा उपकरणलाई अपाङ्गता समावेशी बनाउनुहोस् । बहु क्षेत्रीय लेखाजोखामा, सेल्टर र बसोबाससँग सम्बन्धित अवरोधका बारेमा प्रश्नहरू थप्नुहोस् । हेर्नुहोस् क.२.२.३ ।

सुरूवातको अवस्थामा आई. एफ. आर. सी. को "Guidelines for assessment in emergencies 2008" लाई उपयोग गर्नुहोस् र अपाङ्गतालाई कसरी राम्ररी एकीकृत गर्ने भन्ने बारेमा ध्यान दिनुहोस् ।

- ⇒ अपाङ्गतामा अनुभव भएकाहरूलाई समावेश गरेर लेखाजोखा कार्यदल बनाउने ।
- ⇒ विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूसँग समूहमा अन्तर्वार्ता लिने वा सम्भव भएन भने स्थानीय अपाङ्गता भएका व्यक्तिका संस्थाका मुख्य सूचनादातासँग अन्तर्वार्ता लिने ।
- ⇒ विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूको लागि दैनिक समयतालिका बनाउने ।
- ⇒ सेल्टर र आवासमा अपाङ्गता भएका व्यक्तिहरूको लागि भौतिक पहुँचलाई समावेश गर्न रूजु सूचीलाई विस्तार गर्ने ।

**४: अपाङ्गता सूचनादाता** **क२.२.४**

समुदायस्तरको लेखाजोखामा अपाङ्गता भएका व्यक्तिहरू र उनीहरूका संस्थालाई समावेश गराउने कुरा सुनिश्चित गर्नुहोस् ।

प्रत्यक्षदर्शीलाई सोध्ने र अवलोकन गर्ने : प्रभावित क्षेत्रमा के अपाङ्गता व्यक्तिहरू देखिएका छन् ? यसले उपेक्षा वा समावेशीकरण दुवैको मात्रा कति छ भनेर जानकारी दिन्छ । को को अपाङ्गता भएका व्यक्तिहरू उपेक्षित भएका छन् उनीहरूलाई प्रतिनिधित्व गर्ने संस्थाहरूलाई सोध्नुहोस् ।

**५: अवरोधको अनसंधान गर्ने** **क२.२.५**

पहुँचयुक्त सेल्टर र सेवाको अभावलाई अपाङ्गता भएका व्यक्तिहरूलाई असर पार्ने समस्याको रूपमा अनुसन्धान गर्नुहोस् । सहयोग गर्न सकिने व्यवस्थापन संयन्त्र पहिचान गर्नुहोस् ।

प्राप्त तथ्य सबैलाई बताउनुहोस् । बहु क्षेत्रीय लेखाजोखाले अपाङ्गताको सवाललाई पर्याप्त रूपमा सम्बोधन गर्न सकिएको छैन भने तपाइँले प्राप्त गर्नुभएको तथ्यलाई अपाङ्गता समावेशी संयुक्त रणनीति तयार गर्न उपयोग गर्नुहोस् ।

**६: सेवामा पहुँच** **क२.२.६**

अपाङ्गता भएका व्यक्तिहरूलाई सेवा पुर्याइरहेका संस्था वा संगठनहरूमा विपद्ले पारेको प्रभावको लेखाजोखा गर्नुहोस् (हेल्थ क्लष्टर, स्वास्थ्य मन्त्रालय वा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूबाट यस्तो सूची प्राप्त गर्नुहोस्) । तिनीहरूको सेवालाई पुन: सञ्चालन गर्न के सहयोग गर्नुपर्छ पत्ता लगाउनुहोस् ।

**७: प्राप्त तथ्यको प्रस्तुती** **क२.२.७**

अपाङ्गता भएका व्यक्तिका सेल्टर र बसोबाससँग सम्बन्धित आवश्यकतालाई जोड दिँदै प्राप्त तथ्यलाई समुदायमा पहुँचयुक्त ढाँचामा प्रस्तुत गर्ने कुरा सुनिश्चित गर्नुहोस् ।

**घटना अध्ययन क२.२**

इन्डोनेसियाको जाभामा सन् २००६ मा गएको भूकम्पको बेला अपाङ्गता भएका व्यक्तिका संस्थालाई समावेश गरी राम्रो तयारी र संगठित तरिकाले गरिएको लेखाजोखाले आकस्मिकताको अवस्थामा अपाङ्गता भएका व्यक्तिको पहिचान कसरी राम्रोसँग गर्न सकिन्छ भन्ने कुराको राम्रो उदाहरण प्रस्तुत भएको छ ।

भूकम्पको लगत्तै चारबटा अपाङ्गता भएका व्यक्तिका संस्था र ह्याण्डिक्याप इन्टरनेशनलको बीचमा बैठक आयोजना गरियो । प्रभावित क्षेत्रलाई विभिन्न भागमा बाँडियो र समुदायको प्रणालीबद्ध नक्शाङ्कन सुरूवात गरियो । केही दिनपछि ती संस्थाहरूले ४००० भूकम्प प्रभावित र सहयोगको आवश्यकता रहेका अपाङ्गता भएका व्यक्तिहरू पहिचान गरेका थिए । एक हप्तापछि त्यो संख्या ११००० पुगेको थियो ।

लेखाजोखा फारममा विपदको कारणले अपाङ्गता भएका व्यक्तिहरू लगायत अपाङ्गता भएका व्यक्तिहरू पहिचान गर्ने प्रश्नावली समावेश गरिएको थियो । अपाङ्गता भएका व्यक्तिका संस्थाहरूले समुदायस्तरमा ह्याण्डीक्याप इन्टरनेशनलको सहयोगमा अपाङ्गता सम्पर्क सूत्र स्थापना गरे । अनुगमन गर्न तथ्याङ्क बैङ्क तयार गरियो र सङ्ख्या अध्यावधिक गरियो ।

## क.२.३. आकस्मिक सेल्टर र बसोबास सहयोग

समावेशी प्रतिकार्य रणनीति तथा द्रुत लेखाजोखा (हेर्नुहोस् क.२.१. र क.२.२)ले अपाङ्गता भएका व्यक्तिलाई कसरी सेल्टर र बसोबास सहयोग गर्ने भन्ने बारेमा जानकारी दिन्छ ।

तल आकस्मिकताका अवस्थामा सेल्टर र बसोबास कार्यक्रममा अपाङ्गता भएका व्यक्तिहरूको पहुँच र समावेशीकरणलाई सबल बनाउन प्राविधिक मापदण्ड तथा व्यावहारिक समाधान (हेर्नुहोस् खण्ड ख)सहित आवश्यक सिफारिस गरिएको छ ।

सुरक्षा र संरक्षणका सवाल, जीवन रक्षा सहयोग (Life Saving Aid)मा सामाजिक विभेद वा उपेक्षा लगायत अपाङ्गता भएका व्यक्तिहरूले सेल्टर र बसोबासको वातावरणभित्र सामना गर्नुपर्ने अवरोधका बारेमा राम्ररी बुझेर सुरूवात गर्नुहोस् ।



तपाईंको कार्यक्रममा अपाङ्गता भएका व्यक्तिहरू मूलधारका राहत कार्यक्रममा सहभागी हुनसक्छन् भन्ने निश्चित गर्नुहोस् र सोही समयमा उनीहरूका विशेष आवश्यकतालाई पनि सम्बोधन गर्नुहोस् । सहयोग गर्ने सञ्जाललाई पुन:स्थापना गर्ने काम गर्नुहोस् र व्यक्तिगत व्यवस्थापन गर्ने संयन्त्र (Individual Coping Mechanism ) लाई बलियो बनाउनुहोस् ।

**१: समावेशी वितरण** **क२.३.१**

वितरण प्रणालीलाई समावेशी कसरी बनाउन सकिन्छ भन्ने बारेमा अपाङ्गता भएका व्यक्ति र उनीहरूका संस्थाहरूसँग परामर्श गर्नुहोस् । वितरण गर्ने ठाउँको छनौट, घरमै पुर्याइदिनुपर्ने व्यक्ति तथा यातायात सहयोगको बारेमा ध्यान पुर्याउनुहोस् (हेर्नुहोस् ख.३.१.१ र ख.३.१.६) ।

**२: उपयुक्त वस्तु** **क२.३.२**

उपयुक्त आकस्मिक घरेलु र सेल्टरमा चाहिने सामग्रीका बारेमा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग छलफल गर्नुहोस् । यस्ता सामग्री अपाङ्गता भएका व्यक्तिहरूका लागि अझ पहुँचमा र उपयोगी बनाउन चाहिने थप कुरा तथा प्राविधिक सहयोग पहिचान गर्नुहोस् (हेर्नुहोस् ख.३.१.७ र ३.१.८, ख्.३.२ र ख.३.३) ।

**३: हस्तक्षेपमा प्राथमिकता** **क२.३.३**

स्वत: स्फुर्तरूपमा गरिने बसोबासको व्यवस्थापनमा अपाङ्गता भएका व्यक्तिलाई सुरक्षा र पहुँचको लागि (हेर्नुहोस् ख.१.२) सही हस्तक्षेप पहिचान गर्न अपाङ्गता भएका व्यक्तिका संस्था, शिविर व्यवस्थापक, अपाङ्गता भएका महिला तथा पुरूषलाई संलग्न गराउनुहोस् । नयाँ अस्थायी बसोबास र पहुँचको योजनामा भने सुरूदेखि नै संलग्न गराउनुपर्छ (हेर्नुहोस् ख.१.१) ।

**४: परामर्श** **क२.३.४**

सेल्टर र बसोबासका लागि गरिने सहयोगमा उपयुक्त प्राथमिकता चयन गर्न अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श गर्नुहोस् र विभिन्न विकल्पका फाइदा एवं बेफाइदाका बारेमा बुझ्नुहोस् ।

**५: सेल्टरको विकल्प** **क२.३.५**

स्थानीयस्तरमा चलनचल्तीमा रहेका निर्माण तरिका, बजार लेखाजोखा र आकस्मिक आवश्यकता लेखाजोखा (हेर्नुहोस् क.२.२) (निर्माण सामग्रीको उपलब्धता र बजारको पहुँच)का आधारमा सेल्टरका उपयुक्त विकल्प निर्धारण गर्नुहोस् ।



सेल्टर र बसोबासको अवधारणामा लचकता अपनाउनुहोस् । सहभागीमूलक अवधारणाका आधारमा योजना निर्माण, डिजाइनको बेला अपाङ्गता भएका व्यक्तिका आवश्यकतालाई समेट्नुहोस् । आवश्यक परेको खण्डमा व्यक्तिगत सहयोग उपलब्ध गराउन सक्ने विशेषज्ञ संस्थाहरूलाई संलग्न गराउनुहोस् ।

**६: सेल्टर सहयोग** **क२.३.६**

हाल रहेकै स्थानमा सेल्टरमा अपाङ्गता भएका व्यक्तिको पहुँच बढाएर सहयोग गर्नुहोस् वा प्राथमिकताका आधारमा वैकल्पिक सेल्टरको समाधानको खोजी गर्नुहोस् । जस्तैः भाडामा घर वा होस्टेल । (हेर्नुहोस् ग.२.१ र ग.२.२)

**७ : सूचनामा पहुँच** **क२.३.७**

बहु पहुँच भएका ढाँचामा सेल्टर र बसोबाससम्बन्धी सूचना उपलब्ध गराउनुहोस् (हेर्नुहोस् ग.१.१) । योग्यताका सर्त र गुनासो गर्ने संयन्त्रमा कसरी पहुँच पुर्याउन सकिन्छ भन्ने स्पष्टसँग सञ्चार गरिनुपर्छ । यसको लागि सुझाव लिन अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई सोध्नुहोस् ।

**८: अनुगमन** **क२.३.८**

सेल्टर र बसोबास सहयोग उपयुक्त एवं उपयोगी छन् कि छैनन् भनेर थाहा पाउन गरिने अनुगमनका गतिविधिमा अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागी गराउने कुरा सुनिश्चित गर्नुहोस् (हेर्नुहोस् ग.१.३)।



अलि ठूला बसोबासमा, सामुदायिक केन्द्र र सुरक्षित स्थानका लागि बनाइएका सेल्टरहरूमा अपाङ्गता डेस्क स्थापना गर्नुपर्छ (हेर्नुहोस ख१.१.११)। त्यहाँ तालिमप्राप्त कर्मचारीहरूले सूचना र सहयोग प्रवाह गर्नुपर्छ।

सेल्टर र बसोबाससम्बन्धी गतिविधिले सहयोग सञ्जाललाई बलियो बनाउनुपर्छ। त्यसलाई नष्ट र अवरोध गर्नु हुँदैन। प्राथमिकताको आधारमा स्थान अभाव, गोपनीयता र अपाङ्गता भएका व्यक्तिको संरक्षणलाई सम्बोधन गर्नुहोस्।

## थप अध्ययनका लागि

Handicap International, *Guidance for Disability and Vulnerability Focal Points* (in French): contact@handicap-international.org
HelpAge International and Handicap International (2014), *Hidden victims of the Syrian crisis: disabled, injured and older refugees.* http://www.helpage.org/download/537207495fe87

HelpAge International and IFRC (2012), *Guidance on including older people in emergency shelter programmes*. http://www.ifrc.org/ PageFiles/95749/HelpAge-IFRC-Shelter-Guidelines.pdf

HelpAge International (2012), *Ensuring inclusion of older people in initial emergency needs assessments*. http://www.helpage.org/whatwe- do/emergencies/ensuring-inclusion-of-older-people-in-initialemergency- needs-assessments/
IFRC (2008), *Guidelines for assessment in emergencies*. http://www.ifrc.org/Global/Publications/disasters/guidelines/guidelines-emergency.pdf

Sphere Project (2011), *Sphere Handbook: Humanitarian Charter and Minimum Standards in Disaster Response. Shelter and NFI standards*. http://www.refworld.org/docid/4ed8ae592.html

UNHCR and Handicap International (2011), *Need to know guidance 1: Working with persons with disabilities in forced displacement*. http://www.unhcr.org/4ec3c81c9.html

WHO et al (2013), *Guidance Note on Disability and Emergency Risk Management for Health*.
http://www.cbm.org/article/downloads/54741/Guidance_Note_on_Disability_and_Emergency_Risk_Management_for_Health.pdf

## रूजु सूची क२. आकस्मिक प्रतिकार्य

⇒ आकस्मिकताको स्तर र प्रकार निर्धारण गरिएको छ । अपाङ्गता भएका व्यक्तिका संस्था र अन्य अपाङ्गतासम्बन्धी सूचनादातासँग सम्पर्क स्थापना गरिएको छ ।

⇒ स्थानीय अपाङ्गता भएका व्यक्तिका संस्थाहरू समुदायमा अपाङ्गता भएका व्यक्तिहरूको पहिचान गर्ने काममा र प्रारम्भिक लेखाजोखामा मुख्य सूचनादाताको भूमिकामा संलग्न छन् ।

⇒ सेल्टर र बसोबास समन्वय संयन्त्रले योजना र निर्णय प्रक्रियामा सक्रियरूपमा अपाङ्गता भएका व्यक्तिहरूलाई समावेश गर्छन् ।

⇒ सेल्टर र बसोबास सहयोगका लागि प्राथमिकता छुट्याउन तथा विभिन्न विकल्पका फाइदा र बेफाइदा पहिचान गर्ने अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श लिइन्छ ।

⇒ अपाङ्गता समावेशी बहुक्षेत्रीय लेखाजोखा स्थापित गर्न र अपाङ्गता भएका व्यक्तिहरूका लागि समन्वयात्मक प्रतिकार्य रणनीति विकास गर्न अन्य क्षेत्रसँग सम्पर्क स्थापित गरिएको छ ।

⇒ लेखाजोखा उपकरण र प्रश्नावली अपाङ्गतामैत्री छन् र अपाङ्गता भएका व्यक्तिका संस्थासँगको साझेदारीमा बनाइएका छन् ।

⇒ सबै उमेरका केटाकेटी, महिला तथा पुरूषका विद्यमान सेल्टर र बसोबाससम्बन्धी आवश्यकताका साथै राहत एवं सेवामा पहुँच पुग्न नदिने अवरोध पहिचान गरिएका छन् ।

⇒ अपाङ्गता भएका व्यक्तिका सेवा नक्शाङ्कन भएका छन् । सेल्टर र बसोबासभन्दा बाहेकका आवश्यकताको लागि प्रेषण प्रणाली स्थापना गरिएको छ ।

⇒ लेखाजोखाबाट प्राप्त तथ्य सबै समुदायलाई पहुँचयुक्त ढाँचामा थाहा दिइएको छ । अपाङ्गता भएका व्यक्तिका सेल्टर र बसोबाससम्बन्धी आवश्यकतामा जोड दिइएको छ ।

⇒ कर्मचारी र स्वयमसेवकलाई आकस्मिकताको अवस्थामा सेल्टर बसोबाससँग जोडिएका अपाङ्गताको सवालमा तालिम र सूचना दिइएको छ ।

⇒ अस्थायी सेल्टर र बसोबासमा अपाङ्गता भएका व्यक्तिहरूका लागि सुरक्षा तथा पहुँचमा सुधार ल्याउने उपाय कार्यान्वयन गरिएका छन् ।

⇒ सूचना तथा प्राविधिक मार्गदर्शन बहु र पहुँचयुक्त ढाँचामा उपलब्ध छन् । यसका लागि अपाङ्गता सम्पर्क सूत्र वा समन्वय समूहसँग छलफल गरिएको छ ।

⇒ वितरण गरिएका आकस्मिक सेल्टर र घरमा दैनिक प्रयोगमा चाहिने सामग्रीहरू अपाङ्गता भएका व्यक्तिहरूका लागि उपयोगी एवं पहुँचयुक्त छन् । आवश्यक पर्नेहरूका लागि सहयोग सेवा प्रदान गरिएका छन् ।

⇒ भाडामा लिएका वा कसैले उपलब्ध गराएका सेल्टरहरूमा सेवा आवश्यक पर्ने अपाङ्गता भएका व्यक्तिहरूका लागि अवरोध न्यून गर्न सहयोग उपलब्ध छ ।

⇒ अनुगमन र पृष्ठपोषण संयन्त्र अपाङ्गता समावेशी छन् ।

संकट पश्चात थुप्रै अवरोध लामो समयसम्म रहँदा अझ सुरक्षित र पहुँचयुक्त बनाउन पुन:निर्माण एउटा अवसर हुनेछ ।

# क.३ शीघ्र पुन:प्राप्ति (Early Recovery)

शीघ्र पुन:प्राप्ति (early recovery ) को चरणमा अपाङ्गता भएका व्यक्तिहरूको सेल्टर र बसोबासको समाधानमा बलियो प्रभाव रहनुपर्छ । तर यसका आधारहरू भने पूर्वतयारी र आकस्मिक प्रतिकार्यमा बनेका हुन्छन् ।

**यस अध्यायमा संलग्न विषयवस्तु**





## क३.१ शीघ्र पुन:प्राप्ति समन्वयमा अपाङ्गतासम्बन्धी जनचेतना

**जनकेन्द्रित मानवीय प्रतिकार्य : हाते पुस्तिका (Sphere Handbook: People-centered humanitarian response)**
[...] प्रतिकार्यको बेला विपद् प्रभावित मानिसहरूको निर्णय शक्ति र कार्यक्रमको स्वामित्वमा प्रगतिशील रूपमा बृद्धि हुन्छ। (मुख्य मापदण्ड १, पृष्ठ ५६)

शीघ्र पुनःप्राप्तिको चरण अपाङ्गताको सवालमा केन्द्रित हुनाले दीर्घकालमा पहुँचको वातावरण बनाउन ठूलो प्रभाव पर्छ। अवरोधमुक्त वातावरणको डिजाइनमा सुरूवातमा लाग्ने सामान्य लागतपछि लाग्ने लागतको तुलनामा निकै कम हुन्छ। (१)
सेल्टर र बसोबाससम्बन्धी हस्तक्षेपले आगामी वर्षहरूमा बनाइने भौतिक वातावरणको लागि आकार दिन्छ। अवरोधमुक्त वातावरण अपाङ्गता भएका व्यक्तिको पुनःप्राप्तिको लागि पनि अत्यावश्यक छ।

**१: राष्ट्रिय मार्गदर्शन क३.१.१**
सम्बन्धित अधिकारीहरूसँग सम्पर्क गर्ने र अपाङ्गता भएका व्यक्तिहरूको समावेशीकरणका लागि बनेका नीति र मापदण्डका बारेमा सोध्नुहोस्। सबै पुनःप्राप्ति र पुनःनिर्माणसँग सम्बन्धित क्रियाकलापमा पहुँच भएका डिजाइनका लागि पैरवी गर्नुहोस्।

पहुँच पुर्याउनु विलासपूर्ण काम होइन, तर यो आवश्यक मापदण्ड हो। यसले प्रभावित समुदायका सबै सदस्यहरूलाई सेल्टर, सरसफाइ सुविधा, वितरण, सहयोग, सेवा र अन्य सार्वजनिक भौतिक संरचना लगायत आर्थिक सहयोग तथा सेवामा समान पहुँच प्रदान गर्छ।

तपाईँको देश अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धिको पक्षराष्ट्र हो कि होइन थाहा पाउनुहोस्। हो भने धारा ९, ११ र ३२ मा उल्लेखित राज्यका दायित्वहरूलाई उल्लेख गर्नुहोस्। (हेर्नुहोस् अनुसूची ३, पृष्ठ १५७)

(१) Depending on the type of building, providing full access facilities from the outset costs an average additional 1.12 percent. (Vakis, R. 2006. *Complementing Natural Disasters Management: The Role of Social Protection.* Social Protection Discussion Paper No 0543. Washington, DC. World Bank)

**२: अपाङ्गता सञ्जाल** **क३.१.२**

अपाङ्गता समावेशीकरणको लागि स्थानीय सञ्जाललाई बलियो बनाउनुहोस् । आकस्मिकताको अवस्थामा सक्रिय नभएका अपाङ्गता भएका व्यक्तिका संस्थालाई परिचालन गर्नुहोस् ।

स्थानीय सरोकारवालाले शीघ्र पुनःप्राप्तिका कार्यमा नेतृत्व प्रदान गर्नुपर्छ । क्लष्टर (प्रायः अन्तर्राष्ट्रिय संस्थाहरूले नेतृत्व गरेका)बाट अपाङ्गता भएका व्यक्तिहरूका संस्था समेत समावेश भएका संयन्त्रलाई हस्तान्तरण गर्ने योजना बनाउनुहोस् ।

**३: प्रतिकार्यको मूल्याङ्कन गर्ने** **क३.१.३**

सेल्टर र बसोबासका कार्ययोजना तथा प्रतिकार्य रणनीतिलाई अपाङ्गताको परिप्रेक्ष्यबाट अध्ययन गर्नुहोस् । आवश्यकता मूल्याङ्कनमा अपाङ्गता भएका व्यक्तिहरूको सन्दर्भ उल्लेख गरे नगरेको हेर्नुहोस् (हेर्नुहोस् ग१.३) ।

**४ रणनीति पुनरावलोकन गर्ने** **क३.१.४**

सेल्टर र बसोबाससम्बन्धी रणनीति तथा प्राविधिक मार्गदर्शनलाई अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग गरिएको छलफल एवं आकस्मिक राहत गतिविधि तथा तिनको अपाङ्ता भएका व्यक्तिहरूमा परेको प्रभावको अनुगमन एवं मूल्याङ्कनका आधारमा पुनरावलोकन र अध्यावधिक गर्नुहोस् ।

विपद राहत आकस्मिक कोष (DREF), आकस्मिक अपिल (EA), समन्वयात्मक अपिल प्रक्रिया (CAP)ले शीघ्र पुनःप्राप्तिको बेलामा गरिने सेल्टर र बसोबाससम्बन्धी गतिविधिको बारेमा जानकारी दिन्छ । मूलधारका परियोजनाहरूमा अपाङ्गता भएका व्यक्तिका निकायहरूको सहभागिता प्रवर्द्धन गर्दा दुईमार्गी धारणाको (Twin-track Approach) आवश्यकता पर्दछ ।



**अपाङ्गता भएका व्यक्तिहरूको लागि मानवीय आर्थिक लगानी** (**Humanitarian financing for persons with disabilities** )

"सन् २०१० र २०११ CAP र Flash Appeals अन्तर्गत पेस गरिएका ६ हजार ३ परियोजना मध्ये ९८ परियोजनाले कम्तिमा एउटा क्रियाकलाप अपाङ्गता भएका व्यक्तिलाई लक्षित गरेको थियो र तीमध्ये ४३ वटामा लगानी गरिएको थियो (२) ।"

(२) HelpAge International and Handicap International (2012) *A study of humanitarian financing for older people and people with disabilities* (p.5)

सेल्टर क्लष्टर लगायत विभिन्न माध्यहरूबाट सिकेका राम्रा पाठ तथा राम्रा अभ्यासहरूको अभिलेख राख्नुहोस् र यो अरूमा आदानप्रदान गर्नुहोस् ।

**घटना अध्ययन क३.१**

हाइटीमा सन् २०१० मा गएको भूकम्पपश्चात शीघ्र पुनःप्राप्तिको एउटा हिस्साको रूपमा अपाङ्गता भएका व्यक्तिको समावेशीकरणसम्बन्धी राज्यका सचिवको कार्यालय (BSEIPH ) ले पहुँचमा क्षमता र सचेतना अभिवृद्धि गर्ने प्रक्रिया सुरू गर्यो । सीबीएमले यस प्रक्रियामा आफ्नो विज्ञताको योगदान गर्यो जसले हाइटी सरकारको स्वीकृति प्राप्त गर्यो ।

विश्विद्यालयस्तरको तालिममार्फत निर्माण पेशाकर्मीहरू पहिलो लक्षित समूह थिए । विभिन्न आर्किटेक्ट र इन्जिनियरहरू उनीहरुका डिजाइनहरूमा पहुँच भएका ढाँचा समावेश गर्न चाहन्थे ।

दोस्रो लक्षित समूह भनेको अपाङ्गता भएका व्यक्तिका संस्थाका सदस्यहरू थिए जसले पहुँचसम्बन्धी लेखापरीक्षण (Accessibility Audit ) कसरी गर्ने भन्ने बारेमा तालिम लिए ।

आय आर्जन बाहेक पहुँच लेखापरीक्षणलाई पहुँचसम्बन्धी सवालमा ध्यानाकर्षण गराउने उपकरणका रूपमा पनि उपयोग गर्न सकिन्छ । तालिमको परिणामस्वरूप अपाङ्गता भएका व्यक्तिका संस्थाका सदस्यहरू पनि भवनका डिजाइनका समाधान र विभिन्न विकल्पका बारेमा निर्माण पेशाकर्मीहरूसँग कुराकानी तथा छलफल गर्न सक्षम भए ।

## क३.२ विपद् पश्चातको आवश्यकता लेखाजोखामा समावेशीकरण

अरू मानिसहरू जस्तै अपाङ्गता भएका व्यक्तिहरूले पनि लेखाजोखा र परामर्शहरूमा समावेश हुन तथा सेल्टरका विभिन्न विकल्पहरूबाट छनौट गर्न उही अवसर पाउनुपर्छ।
अपाङ्गता भएका व्यक्तिहरू आकस्मिक अवस्थाबाट कसरी प्रभावित भएका छन् भनी बुझ्न तथा सेल्टर र बसोबासमा प्राथमिकता एवं छनौटका लागि शीघ्र पुनःप्राप्तिको चरणमा विस्तृत र निरन्तर लेखाजोखा गर्न सक्षम हुनुहुनेछ।

अध्याय ग१ मा तपाईँले बैठकहरू एवं कार्यक्रमहरूमा समावेशी सञ्चार र पहुँचका लागि सिफारिस पाउनुहुने छ। तीमध्येका धेरै सिफारिस क१.२ मा पनि मान्य हुन्छन्।

**१: तथ्याङ्क पुनरावलोकन** **क३.२.१**

दर्ता अभिलेख र द्रुत लेखाजोखाबाट प्राप्त तथ्य लगायत माध्यमिक तहका तथ्याङ्कको विस्तृत पुनरावलोकन गर्न अपाङ्गता भएका व्यक्तिका संस्था र अपाङ्गता सम्पर्क सूत्रहरूलाई संलग्न गराउनुहोस्। सूचनाको जानकारी गराउन अपाङ्गता भएका व्यक्ति र राष्ट्रिय अधिकारीहरूलाई बोलाउने गर्नुहोस्।

अपाङ्गता भएका विरामीहरू र नयाँ अपाङ्गता हुनसक्ने सम्भावना भएका भनी पहिचान गरिएका घाइतेहरू लेखाजोखामा समावेश गरिएका छन् भन्ने सुनिश्चित गर्न अस्पताल र स्वास्थ्य सेवा प्रदायकसँग सम्पर्क गर्नुहोस्। व्यक्तिगत फलोअप र प्रेषण सेवाको लागि तथा यसैगरी डिस्चार्ज भैसकेपछि चाहिने सेल्टर बसोबास सहयोगको लागि योजना बनाउनुहोस्।

**२: लेखाजोखाको नक्शाङ्कन** **क३.२.२**

आउने समयमा गर्नुपर्ने लेखाजोखाको पहिचान गर्नुहोस्। जस्तैः विपद् पश्चातको आवश्यकता मुल्याङ्कन (PDNA)। अपाङ्गताको सवाल समावेश भएको सुनिश्चित गर्नुहोस्।

**३: प्रश्नावली** **क३.२.३**

विस्तृत लेखाजोखा फारम अपाङ्गता समावेशी हुनेगरी र विभिन्न सेल्टर बसोबाससम्बन्धी अवरोध पहिचान गर्न पुनरावलोकन गर्नुहोस्।

**४: तालिम** **क३.२.४**

लेखाजोखासँग सम्बन्धित कर्मचारीहरूलाई तालिम दिनुहोस् । आवश्यक परेको खण्डमा इन्द्रीयसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरूसँग सञ्चार गर्ने विज्ञता र सीप भएका कर्मचारी एवं स्वयंसेवक भर्ना गर्ने तथा उनीहरूलाई पनि लेखाजोखामा समावेश गराउनुहोस् ।

आकस्मिक चरणमाभन्दा शीघ्र पुनःप्राप्ति र पूर्वतयारीको बेलामा तालिम बढी सघन तरिकाले लैजान सकिन्छ । (हेर्नुहोस् क२.२.१)

**५. साझेदारलाई संलग्न गराउने** **क३.२.५**

सूचना संकलन गर्न र त्यसलाई आधिकारिकता दिन अपाङ्गता भएका व्यक्तिका संस्था तथा अपाङ्गता सम्बन्धी विशेषज्ञहरूलाई लेखाजोखाको साझेदारका रूपमा संलग्न गराउनुहोस् ।

**६. लेखाजोखा उपकरण** **क३.२.६**

लेखाजोखा उपकरण अपाङ्गता भएका व्यक्तिहरूका लागि समावेशी हुन्छ भन्ने र प्राप्त तथ्यङ्क उमेर, लिङ्ग तथा अपाङ्गताको प्रकार अनुसार वर्गीकरण गरिन्छ भन्ने सुनिश्चित गर्नुहोस् ।

**७. फर्कँदाका अवरोध** **क३.२.७**

सेल्टर र बसोबाससँग सम्बन्धित अवरोधलाई बुझ्ने, तर विस्थापित भएका अपाङ्गता भएका व्यक्तिहरूलाई पुनः आफ्नो थलोमा फर्कन रोक्ने अवरोधको पनि पहिचान गर्नुहोस् ।

**८. प्राप्त तथ्यलाई प्रस्तुत गर्ने** **क३.२.८**

लेखाजोखाका प्राप्त तथ्यलाई बहु पहुँचयुक्त ढाँचामा प्रस्तुत गरिएको छ तथा यसले अपाङ्गता भएका व्यक्तिका सेल्टर र बसोबाससँग सम्बन्धित आवश्यकतालाई जोड दिएको छ भन्ने सुनिश्चित गर्नुहोस् ।

**९ फलोअपको छलफल** **क३.२.९**

प्राप्त तथ्यको बारेमा तथा सेल्टर र बसोबाससँग सम्बन्धित सहयोगका सम्भावित विकल्पको बारेमा छलफल गर्न अपाङ्गता भएका व्यक्तिका संस्था, राष्ट्रियस्तरका अधिकारीहरू र समुदायका प्रतिनिधिहरूलाई बोलाउनुहोस् ।

(१) उदाहरणको लागि स्थानीय साङ्केतिक भाषा, यो व्यापक रूपमा प्रयोग गर्नेगरिएको छ भनेमात्र ।

**घटना अध्ययन (क३.२)**

पाकिस्तानमा विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूसँग काम गर्ने संस्था हो STEP। जसको उद्देश्य क्षमता विकास र पैरवीको माध्यमबाट अपाङ्गता भएका व्यक्तिहरूको सशक्तिकरण गर्नु हो । STEP ले सन् २००५ मा आएको भूकम्प, २००९ को IDP संकट र २०१० को विनाशकारी बाढीको बेला आकस्मिक प्रतिकार्यमा भाग लिएको थियो ।

अपाङ्गतासम्बन्धी सूचना तथा स्रोत केन्द्र (IRCD) सन् २००५ मा स्थापना भएको थियो र साइट सेभरसँगको साझेदारीमा सन् २०१० मा पुनः सक्रिय भएको थियो । STEP को अनलाइन पोर्टलमार्फत नौसेरा र चारसदा जिल्लामा बाढी प्रभावित अपाङ्गता भएका व्यक्तिहरूको तथ्याङ्क सङ्कलन गरियो र यसलाई पाकिस्तानको रेडक्रिसेन्ट सोसाइटीको संकट केन्द्रसँग सम्बन्ध स्थापित गरियो ।

STEP ले ४८० जना रेडक्रिसेन्ट स्वयंसेवकलाई आकस्मिक अवस्थामा र पुन:प्राप्ति सञ्चालन (Recovery Operation)मा अपाङ्गतालाई कसरी समावेश गर्ने भन्ने विषयमा तालिम प्रदान गर्‍यो । लेखाजोखा फारामहरू पुनरावलोकन गरिए र अपाङ्गता भएका व्यक्तिका आवश्यकताका बारेमा प्रश्नहरू समावेश गरिए ।

तालिम पश्चात पाकिस्तान रेडक्रिसेन्ट सोसाइटीद्वारा १०८ जना अपाङ्गता भएका व्यक्तिहरूलाई उद्धार गरियो र पहुँच भएका सेल्टर उपलब्ध गराइयो । सेवा र सहयोग प्रदानकर्तालाई सजिलो होस् भनी त्यस्ता सेल्टहरूमा रातो झण्डा प्रयोग गरिएको थियो ।

अपाङ्गता भएका व्यक्तिहरू बस्ने सेल्टरहरूमा झण्डा नै उपयोग गर्नुपर्छ भनी सिफारिस गरिएको होइन, तर यसको सट्टामा एउटा निश्चित ठेगाना प्रणाली उपयोग गर्नुहोस् र सेवा प्रदायकलाई सूचना उपलब्ध गराउनुहोस् । (हेर्नुहोस् ख१.१.९)

## क३.३. शीघ्र पुनःप्राप्ति सेल्टर र बसोबास सहयोग

शीघ्र पुनःप्राप्ति चरणमा अपाङ्गता भएका व्यक्तिलाई योजनाबद्ध बसोबासको डिजाइन र लेआउट लगायत सेल्टर र बसोबाससम्बन्धी गतिविधिमा प्रत्यक्ष रूपमा संलग्न गरिनुपर्छ ।

शीघ्र पुनःप्राप्तिका लागि सेल्टर रणनीति प्रायः अझ राम्रो र सुरक्षित बनाउने तथा विपद्अघिको तुलनामा मापदण्डमा सुधार गर्ने अवसरमा आधारित हुन्छन् । यस अवधारणाको एउटा अभिन्न अङ्ग पहुँच हो ।

समय बित्दै जाँदा सेल्टर र बसोबासका लागि सङ्क्रमणकालीन सेल्टर, पुनर्वास, र आफ्नो पुरानै थलोमा फिर्ता हुने लगायतका अरू थप विकल्प खुला हुनेछन् । अन्य मानिससँगै अपाङ्गता भएकाहरू पनि प्राथमिकतासाथ आफ्नो पुरानो थलोमा फर्कन ध्यान दिनेछन् ।

यस अध्यायमा शीघ्र पुनःप्राप्ति चरणमा कसरी विभिन्न सेल्टर समाधानहरू उपलब्ध गराउने र तिनलाई अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँच बनाउने भन्नेबारेमा सिफारिस गरिएका छन् । यहाँ गरिएका सिफारिस कार्यसञ्चालनसँग र प्राविधिक मापदण्डको लागि खण्ड ‘  ख’ सँग सम्बन्धित छन् ।

**१: अवरोधरहीत ढाँचा** **क३.३.१**

सबै सेल्टर र बसोबासका डिजाइनमा पहुँचसम्बन्धी मापदण्डमा ध्यान दिनुहोस् । समयअनुसार आवश्यकता परिवर्तन हुन्छन् । बालबालिका ठूला हुन्छन् । मानिसहरू बृद्ध हुन्छन् । र, अवरोधरहीत डिजाइनले सबैलाई फाइदा पुर्‍याउँछ ।

अध्याय ख१ (पृष्ठ ६७) मा भू-संरचना, बाटो, निकास, पार गर्ने ठाउँ, सेवा र सुविधा रहने स्थान लगायत बसोबासका डिजाइनका मापदण्ड संलग्न छन् ।

अध्याय ख२ (पृष्ठ ८३)ले पहुँच भएका सेल्टरको लागि र्‍याम्प, ढोकाको चौडाई, ढोकाको समात्ने, समात्ने बार र अन्य मापदण्डको सिफारिस गरेको छ ।

**२: परामर्श** **क३.३.२**

सेल्टर र बसोबास सहयोगका प्राथमिकताको बारेमा अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श गर्नुहोस् । अपाङ्गता भएका बालबालिका र उनीहरूका अभिभावकलाई पीरमर्कामा समावेश गर्नुहोस् । विभिन्न विकल्पका फाइदा र वेफाइदाका बारेमा राम्ररी बुझ्नुहोस् । पहुँचसम्बन्धी विशेष आवश्यकता पहिचान गर्नुहोस् ।

समात्ने बार, शौचालयको शौच गर्न बस्ने स्थान, झ्याल र ढोकाको खुल्ला भाग, प्रकाशको व्यवस्था र पहुँचसहितका घरायसी सामग्रीमा पनि त्यत्तिकै मात्रामा ध्यान दिइनुपर्छ, तर यसका लागि व्यक्तिका आवश्यकता र उपलब्ध सामग्रीको आधारमा रचनात्मक समाधानलाई पर्याप्त स्थान दिइनुपर्छ ।

**३: प्रेषण** **क३.३.३**

WASH, स्वास्थ्य वा संरक्षण जस्ता अन्य क्षेत्रसँग साझेदारी स्थापित गर्नुहोस् । सेल्टर र बसोबासको क्षेत्रभन्दा बाहिरका आवश्यकता पहिचान गरेपछि सम्बन्धित ठाउँमा प्रेषण गर्नुहोस् ।

**४: सेल्टर मार्गदर्शन** **क३.३.४**

निर्माणका लागि बनाइएका राष्ट्रिय मापदण्ड र सेल्टर क्लष्टर निर्देशिकाको पालना गर्नुहोस् ।

**५: डिजाइनको निर्णय** **क३.३.५**

सेल्टर र बसोबास डिजाइनसँग जोडिएका पहुँचसम्बन्धी मापदण्ड पहिचान गर्नुहोस् । ती मापदण्डलाई सुरूदेखि ध्यान दिइएको छ भन्ने सुनिश्चित गर्नुहोस् । यसमा सम्बन्धित क्षेत्रको भूस्थिति र सेवासम्मको दूरी पनि संलग्न हुनसक्छ, तर अवरोधरहीत प्रवेशमार्ग, ढोकाको चौडाइ, झ्यालको उचाइ वा आन्तरिक संगठन पनि पर्छन् ।

**६: निर्माण कार्य** **क३.३.६**

व्यक्तिगत सेल्टर निर्माण तथा समुदाय सुधार (तलको घटना अध्ययन हेर्नुहोस् र थप सिफारिसको लागि अध्याय ग३ हेर्नुहोस्) दुवै गतिविधिमा अपाङ्गता भएका व्यक्तिहरूलाई संलग्न गर्ने प्रयास गर्नुहोस् । यसले आय आर्जनसम्बन्धी कार्यमा योगदान पुर्‍याउन सक्छ र नकारात्मक सोचलाई पनि चुनौति दिन्छ ।

**७: प्राविधिक सहयोग** **क३.३.७**

सेल्टरहरूको मर्मत सम्भार र स्तरोन्नति सुनिश्चित गर्न अपाङ्गता भएका व्यक्तिहरूलाई प्राविधिक सहयोग (स्वयंसेवक र श्रमिकसहित) प्रदान गर्नुहोस् । त्यसको फलोअप गर्नुहोस् ।

**८: सूचनामा पहुँच** **क३.३.८**

सेवा र सामुदायिक गतिविधिमा कसरी पहुँच पुर्याउन सकिन्छ भन्ने बारेमा पहुँचसहितका ढाँचामा सूचना उपलब्ध गराउनुहोस् (हेर्नुहोस् क३.२.७) । जोखिम न्यूनीकरण गर्न र उपेक्षाबाट बचाउन (हेर्नुहोस् क.१) विभिन्न उपाय कार्यान्वयन गर्नुहोस् ।

**घटना अध्ययन (क३.३)**

Differently Abled Persons Multi Purpose Cooperative नामक परियोजना सुरूवात गरियो जुन अपाङ्गता भएका व्यक्तिहरूले सञ्चालन गरेको विद्यालयका मेच र टेबुल बनाउने सहकारी हो । यो सहकारी मिन्डानानो, फिलिपिन्सको टापुस्थित सान फ्रान्सिस्को रहेको छ ।

सन् २०१२ को डिसेम्बरमा बोफा नाम गरेको सामुद्रिक आँधीले मिन्डानानोलाई आक्रमण गर्‍यो र १ लाख ७० हजार मानिसलाई विस्थापित गर्दै यसले व्यापक क्षति पुर्‍याएको थियो । SAFRA ADAP ले आफ्नो कार्यशालालाई “ प्रिफेब्रिकेटेड सेल्टर” बनाउनको लागि उपयोग गर्‍यो र सीवीएमको सहयोगमा “ इमरजेन्सी हाउजीङ लाइभ्लीहुड प्रोजेक्ट”को सुरूवात गर्‍यो ।

६० जना मानिसहरू काम गर्ने त्यस सहकारीले अपाङ्गता भएका व्यक्ति र जोखिममा रहेका समूह (जस्तैः परिवारको नेतृत्व गर्ने महिला तथा ज्येष्ठ नागरिक)का लागि ५० वटा सेल्टर बनाउनका लागि सामग्री तयार गर्‍यो । सेल्टरको पर्खाल बाँसको लचिलो फ्रेमलाई दुईपट्टीबाट बलियो सिमेन्टको प्यानलले च्यापेर बनाइयो । ती पर्खाललाई सेल्टर बनाइने स्थानमा ढुवानी गरियो र स्थानीय कामदारहरूको समूहले त्यसलाई जोडजाड गरेर सेल्टर निर्माण गरे ।

फिलिपिन्समा सन् २०१३ को अन्त्यतिर आएको हाइयान (योलान्डा) नाम गरेको सामुन्द्रिक आँधी पश्चात सीबीएमले मिन्डानो परियोजनालाई भिसायासमा अनुकरण गर्न सकिन्छ कि भनी एकपटक भ्रमण गर्‍यो । SAFRA ADAP लाई समावेश गरेको अपाङ्गता भएका व्यक्तिका सहकारीहरूको राष्ट्रिय महासङ्घको पहिले नै प्रभावित क्षेत्रहरूमा तीनवटा शाखा थिए र त्यसैकारण यो परियोजनामा समावेश हुनसक्ने बलियो सम्भावना थियो ।

क्याटिल, मिन्डानोमा बनाइएका घरहरूको लेखाजोखाले ती विपद् धान्न सक्ने क्षमता भएका र अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा छन् भन्ने देखायो । फलोअप परियोजनाका मुख्य दुईवटा उद्देश्य छन् : १) जोखिममा रहेका घरपरिवारलाई स्थानीय ज्ञान र परम्परागत निर्माण शैली प्रयोग सेल्टर उपलब्ध गराउनु र , (२) अपाङ्गता भएका व्यक्तिको सीपको उपयोग गरी उनीहरूलाई संलग्न गराउनु ।

## थप अध्ययनको लागि

IDDC (2008), *Make Development Inclusive: Mainstreaming disability in  development coordination*.
http://www.make-development-inclusive.org

GPDD (2010), *Haiti: reconstruction for all - Toolkit for Long Term  Recovery*.
http://capacity4dev.ec.europa.eu/disability-and-developmentnetwork/ blog/haiti-toolkit-long-term-recovery-gpdd

HelpAge International and Handicap International (2012), *A study  of humanitarian financing for older people and people with disabilities*. http://www.handicap-international.org.uk/Resources/ Handicap%20International/PDF%20Documents/A%20study%20 of%20humanitarian%20financing.pdf

## रूजु सूची क.३. शीघ्र पुनःप्राप्ति

- ⇒ शीघ्र पुनःप्राप्तिको समन्वयमा र पहुँचसम्बन्धी राष्ट्रिय नीति निर्माणमा राष्ट्रिय अधिकारीहरू र अपाङ्गता भएका व्यक्तिका संस्थाहरू सहभागी भएका छन् ।
- ⇒ विनियोजित बजेट र विशिष्ट सूचकसहित सेल्टर र बसोबासको प्रस्तावमा अपाङ्गतालाई समावेश गराइएका छन् ।
- ⇒ प्रभावित क्षेत्रहरूमा तथ्याङ्कका बारेमा जानकारी गराउँदा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई बोलाइन्छ र माध्यामिकस्तरका सूचनाको पुनरावलोकनमा सहभागी गराइन्छ ।
- ⇒ बहुक्षेत्रीय लेखाजोखामा अपाङ्गताका सवाल समावेश गरिन्छन् । जस्तै, विपद् पश्चातका आवश्यकता मूल्याङ्कन ।
- ⇒ लेखाजोखा गर्ने कार्यदलले अपाङ्गता विषयमा तालिम पाएको हुन्छ र नयाँ नियुक्त गरेर होस् वा अपाङ्गता भएका व्यक्तिका संस्थासँग साझेदारी गरेर होस् अपाङ्गतासम्बन्धी विज्ञहरूबाट सहयोग प्राप्त गरेको हुन्छ ।
- ⇒ लेखाजोखा फाराम अपाङ्गता समावेशी हुनेगरी, अवरोध पहिचान गर्न तथा सेल्टर र बसोबासमा प्राथमिकता दिनको लागि पुनरावलोकन गरिन्छ ।
- ⇒ सूचनादाताका रूपमा विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूलाई समावेश गराइन्छ र लेखाजोखा गर्ने उपकरण अपाङ्गता समावेशी हुन्छन् ।
- ⇒ हाल बसिरहेको सेल्टरको अवस्था र आफ्नो वास्तविक समुदाय दुवैको अवस्थाको लेखाजोखा गरिन्छ । पुरानो थलोमा फर्कन रोक्ने अवरोध पहिचान गरिन्छ ।
- ⇒ लेखाजोखाबाट प्राप्त तथ्यलाई पहुँचको ढाँचामा प्रस्तुत गरिन्छ । सेल्टर र बसोबाससँग सम्बन्धित अपाङ्गता भएका व्यक्तिका आवश्यकतालाई जोड दिइन्छ ।
- ⇒ तथ्यका बारेमा समुदायलाई सुसूचित गर्न पहुँचसहितका बैठक आयोजना गरिन्छ । सेल्टर र बसोबासका लागि गरिने सम्बोधनमा विभिन्न विकल्पका बारेमा छलफल गरिन्छ ।
- ⇒ सेल्टर र बसोबासका प्राथमिकताका विषयमा सबै उमेर समूहका केटाकेटी, महिला तथा पुरूष अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श गरिन्छ । उनीहरू व्यक्तिगत सेल्टरको डिजाइनमा प्रभाव पार्न सक्षम हुन्छन् ।
- ⇒ अपाङ्गता भएका व्यक्तिहरूका लागि सेल्टर राख्ने स्थान पहिचान गर्दा आवतजावत र सेवाको पहुँचलाई ध्यान दिइन्छ ।

⇒ पहुँचसम्बन्धी राष्ट्रिय मापदण्ड पहिचान गरिन्छ र सुरूदेखि नै यसलाई उपयोगमा ल्याइन्छ ।

⇒ राष्ट्रिय मापदण्ड र निर्देशिकाअनुरूप वा त्यसभन्दा माथि उठेर सेल्टर र बसोबासको डिजाइनमा पहुँचलाई सुरूवातदेखि नै ध्यान दिइन्छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई सेल्टर निर्माण र बसोबास सुधारका गतिविधिमा संलग्न गराइन्छ ।

⇒ सेल्टरको मर्मत सम्भार र स्तरोन्नति गर्न अपाङ्गता भएका व्यक्तिहरूलाई प्राविधिक सहयोग तथा फलोअप उपलब्ध गराइन्छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूका लागि उपलब्ध सेल्टर र बसोबास गतिविधिको प्रभाव अनुगमन गरिन्छ । तथ्यलाई राम्रा अभ्यास र सिकाइका रूपमा जानकारी गराइन्छ ।

⇒ नयाँ अस्थाई वा स्थायी प्रकृतिको अपाङ्गतासहित अस्पतालबाट डिस्चार्ज भएका व्यक्तिहरूलाई सेल्टर र बसोबास सहयोग प्रदान गर्न स्वास्थ्य लगायत अन्य क्षेत्रहरूसँग प्रभावकारी प्रेषण संयन्त्र स्थापित गरिएको छ ।

# सेल्टर र बसोबासको लागि प्राविधिक मार्गदर्शन

यस भागमा विभिन्न प्रकारका सेल्टर र बसोबासको लागि डिजाइनका मापदण्ड र प्राविधिक समाधान संलग्न गरिएका छन् । सिफारिसलाई आकस्मिकचरणमा अवलम्बन गरिएको छ, तर ती शीघ्र पुनःप्राप्तिका गतिविधि र पूर्वतयारीका लागि पनि सम्बन्धित छन् ।
हरेक परिस्थितिसँग मेलखाने गरी कुनै तयारी समाधान हुँदैन । यसको सट्टामा सेल्टर र बसोबासको पहुँचयुक्तताको लागि रचनात्मक र व्यावहारिक उपाय पत्ता लगाउन अपाङ्गता भएका व्यक्तिहरूसमेतको संलग्नतामा सिफारिसलाई सेल्टरका पेशाकर्मीसँग छलफल गर्ने सुरूवात बिन्दुको रूपमा हेरिनुपर्छ ।

यस खण्डमा समावेश गरिएका विषयवस्तु



---

हेर्नुहोस् : अपाङ्गता भएका व्यक्तिहरूको अधिकारसम्बन्धी महासन्धि (यूएनसीआरपीडी)को धारा ९ । अनुसूची ३



कमजोर तरिकाले योजना गरिएका र पहुँच नभएका सामूहिक केन्द्रले अपाङ्गता भएका व्यक्तिहरूको उपेक्षा र परनिर्भरतालाई बढावा दिन्छन् । यिनले समाजको नकारात्मक दृष्टिकोणलाई लगातार बढाइरहेका हुन्छन् ।



# ख१ बसोबासको लागि मापदण्ड

ठूलो संख्यामा मानिसहरू विस्थापित हुनेगरी भएको आकस्मिकताको अवस्थामा राहत गतिविधिअन्तर्गत बसोबास (Settlement) प्रायः सबैभन्दा केन्द्रबिन्दुमा हुनेगर्छ । अपाङ्गता भएका व्यक्तिहरूका लागि अस्थायी सेल्टरहरू अवरोध नभएका हुन्छन् । तिनलाई समाधान गर्न कठिन हुन्छ । अनुकूलता (Adaptions ) र स्तरोन्नतिमार्फत यस्ता अवरोधलाई सम्बोधन गर्नु जरूरी हुन्छ, तर सँगसँगै पुनः स्थान निर्धारण (Relocation) र आफ्नो पुरानै थलोमा फर्कने विषयमा पनि ध्यान पुर्‍याउनैपर्छ ।
यस अध्याय विस्थापित मानिहरूका लागि सामूहिक बसोबास (शिविर र समूहिक केन्द्र)मा केन्द्रित हुनेछ ।

**यस अध्यायमा समावेश गरिएका विषयवस्तु**

## ख१.१ योजनाबद्ध बसोबासमा पहुँच

योजनाबद्ध शिविरहरू पहुँचमा हुन्छन् भन्ने जरूरी छैन किनभने तिनीहरू संगठित हुन्छन् । अनावश्यक अवरोधलाई हटाउनका निम्ति र अपाङ्गता भएका व्यक्तिहरूलाई सेवामा समान पहुँच पुर्‍याउन सुरूदेखि नै पहुँचमा ध्यान दिनु महत्वपूर्ण हुन्छ ।

भूस्थिति, सतहको पानीको निकास र माटोको गुणस्तर साथै सरसफाइका सुविधाको लेआउट र सार्वजनिक सेवामा अपाङ्गता भएका व्यक्तिहरू दैनिक क्रियाकलापमा सहभागी छन् या सेल्टरभित्रै उपेक्षित भएका छन् निर्धारण गर्नुहोस् ।

**१: बसोबास रहेका स्थानमा पहुँच ख१.१.१**

अपाङ्गता भएका व्यक्तिहरूले बसोबास व्यवस्था गरिएका स्थानमा सेवामा पहुँचको अवसरसहित एक ठाउँबाट अर्को ठाउँमा आवागमन गर्न र त्यहाँबाट बाहिर काममा जान पाउनुपर्छ ।

व्यक्तिगत र परिवार तहदेखि डिजाइन गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिहरूसँग उनीहरूले उपयुक्त ठानेका स्थानको बारेमा परामर्श गर्नुहोस्, तर यसमा सहयोग सञ्जाल चाहिँ अवरूद्ध हुनुहुँदैन । सेवा र सुविधासम्मको दूरी पनि ध्यान दिइनु महत्वपूर्ण कुरा हो (हेर्नुहोस् ख१.१.६), तर एकै स्थानमा अपाङ्गता भएका व्यक्तिहरूको छुट्टै समूह (Clustering ) नबनाउनुहोस् ।

**२: बसोबासको भूस्थिति ख१.१.२**

१:५० र १:२० (२.५%) कोबीचमा भिरालोपन मान्य हुन्छ ।




कुनै भिरालो स्थान नभएको ठाउँ बढी पहुँचयुक्त हुन्छ र शारीरिक वा दृष्टिसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरूलाई यताउता हिँड्न सहज हुन्छ, तर यस्ता ठाउँमा पानी जम्ने तथा निकासको समस्या हुनसक्छ र भेक्टर वोर्न रोगको जोखिम पनि हुनसक्छ ।

**३: निकास तर्ने ठाउँ** **ख१.१.३**

सतहमा जमेको पानीको कारण अपाङ्गता भएका व्यक्तिहरूलाई कुनै अवरोध सिर्जना गर्नुहुँदैन । खुल्ला निकासका लागि कुलो आवश्यक हुन्छ र समात्ने बारसहित त्यस्ता कुलो तर्ने ठाउँ पनि हुनुपर्छ । यसको डिजाइन फरक फरक हुन सक्नछन् ।




**४. हिँड्ने बाटो :** **ख१.१.४**

दुईवटा ह्वीलचियर विपरीत दिशाबाट एकैसाथ आउँदा पनि सहजै गुडाउन सकियोस् भन्नका लागि हिँड्ने बाटो कम्तिमा १५० सेन्टिमिटर फराकिलो हुनुपर्छ । १:२० को अनुपातभन्दा बढीको भिरालो, निकास कुलो तर्ने ठाउँ र भर्याङमा समात्ने बार बनाउनु आवश्यक छ ।



हिँडने बाटोको सतहका लागि कसिला खालका मसिना गिटीढुङ्गा उपयुक्त हुन्छन् । १०० देखि २०० मिटरको फरकमा आराम गर्ने छहारी उपलब्ध गराउनुहोस् ।

**५: सरसफाइ सुविधा** **ख१.१.५**

पिउनेपानी राखिएका स्थान वा धारा र कम्तिमा १० प्रतिशत शौचालय अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा हुनुपर्छ । तिनलाई चिनाउने स्पष्ट सङ्केत र व्यक्तिगत सेल्टरबाट कम्तिमा ५० मिटर दूरीमा हुनुपर्छ (१) ।




**६: प्रकाश व्यवस्था** **ख१.१.६**

सेल्टर र पानीको व्यवस्था गरिएको ठाउँ तथा शौचालयमा राती ओहोरदोहोर गर्दा अपाङ्गता भएका व्यक्तिहरूका लागि सुरक्षा र पहुँचमा बृद्धि गर्न प्रकाशको व्यवस्था गरिनुपर्छ (हेर्नुहोस् ख३.२.५) ।

सरसफाइमा काम गर्ने निकायहरूसँग आकस्मिक समाधानका बारेमा छलफल गर्नुहोस् र पानी, सरसफाई र स्वास्थ्य सुविधाको पहुँच सम्बन्धमा आवश्यक मार्गदर्शनको लागि परामर्श गर्नुहोस् ।

⇒ *सामुदायिक पानी आपूर्ति, स्वास्थ्य र सरसफाइ सुविधा–* प्राविधिक पुस्तिका– वाटर एड (२०१२)

⇒ *विकासोन्मुख देशहरूमा पहुँचयुक्त वातावरण कसरी बनाउने :* पानी र सरसफाइ सुविधाहरूमा पहुँच; ह्याण्डीक्याप इन्टरनेशनल २००८

⇒ *अपाङ्गता भएका व्यक्ति तथा अन्य जोखिममा रहेका समूहको लागि पानी तथा सरसफाइ : पहुँच अभिबृद्धि गर्ने सेवाहरूको डिजाइन*

– Jones, Hazel and Reed, Bob; WEDC Loughborough, UK (2005)

**७: दैनिक क्रियाकलाप** **ख१.१.७**

विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूसँग उनीहरूले दैनिक क्रियाकलाप जस्तै पकाउने, लुगा धुने, खाना र अन्य सामग्री प्राप्त गर्ने, घरको फोहर व्यवस्थापन गर्ने आदिमा भोग्नु परिरहेका कठिनाइका बारेमा सोध्नुहोस् । आवश्यकताअनुसार सहयोग प्रदान गर्नुहोस् ।

*(१) यी अल्पकालीन आकस्मिक लक्ष्य हुन् । दीर्घकालमा २० प्रतिशत शौचालय पहुँच भएका हुनुपर्छ र ती व्यक्तिगत सेल्टरबाट ३० मिटर पर हुनुपर्छ ।*

**८ सूचनापाटी** **ख१.१.८**

प्रवेशद्वारमा भित्रको योजनाबद्ध बसोबासका मुख्यमुख्य जानकारीसम्बन्धी सूचना समावेश गरी ट्याकटाइल नक्शासमेतको पहुँचसहितका सूचनापाटी उपलब्ध गराउनुपर्छ । विभिन्न रङ, नाम र सङ्केत प्रयोग गरी वा बसोबास भएका स्थानको नजिक कुनै सङ्केत राखेर अभिमुखीकरणलाई सहजीकरण गर्न सकिन्छ ।




**९: ठेगाना प्रणाली** **ख१.१.९**

बसोबासमा रहेका मानिसहरूलाई पहिचान गर्न वा उनीहरूका बारेमा थाहा पाउन थप फलोअपको जरूरी पर्छ । "लिखित नाम वा सङ्ख्यासहित सङ्केत, तस्बिर वा रङको प्रयोगले मानिसहरूलाई शिविरभित्रका बाटो पत्ता लगाउन सहज बनाउँछ (२)। "

**१०: अपाङ्गता डेस्क** **ख१.१.१०**

बसोबास क्षेत्र अपाङ्गता भएका व्यक्तिहरूका लागि निकै ठूलो छ भने कर्मचारी वा स्वयंसेवकसहित अपाङ्गता सूचना र भेटघाट बिन्दू (Disability Information and Meeting Points, अपाङ्गता डेस्क) स्थापना गर्नुहोस् । सानो आकारको बसोबासमा पनि यो लाभदायक नै हुन्छ (३) ।

शिविर व्यवस्थापन टुलकिट (Camp Management Toolkit) (पृष्ठ २०७) ।

*खेलमैदान र बालमैत्री स्थान अपाङ्गता भएका बालबालिका लगायत सबैका लागि पहुँचमा हुनुपर्छ (NRC 2008) ।*

---

२. NRC (2008), *Camp Management Toolkit,* Address Systems, p.202

३ बसोबास व्यवस्थापन गरिएका स्थानहरूमा अपाङ्गता भएका व्यक्तिहरूको बढी भौतिक उपस्थिति गराउने बाहेक अपाङ्गता डेस्कको अर्को उद्देश्य दृष्टिकोणजन्य अवरोध पहिचान गर्ने तिनीहरूलाई सेल्टर र बसोबास सहयोगसँगसँगै सम्बोधन गर्ने हुनुपर्छ ।

**घटना अध्ययन, ख१.१**

सिरियामा गृहयुद्ध भडकिएपछि २५ लाख मानिसहरू आफ्नो ठाउँ छोडेर भागे र त्यसमा झण्डै ६ लाख छिमेकी देश जोर्डनमा गए (4)। १ लाखभन्दा बढी शरणार्थी त एउटै जाटिरा शिविरमा थिए। ह्यण्डिक्याप इन्टरनेशनल र हेल्पेजले गरेको सर्भेक्षणकाअनुसार हरेक पाँच जनामा एक जना शारीरिक अपाङ्ता भएका वा इन्द्रीयसम्बन्धी अपाङ्गता भएका थिए (5)।

सन् २०१२ को नोभेम्बरमा ह्याण्डिक्याप इन्टरनेशनलले शिविरको पहुँचसम्बन्धी लेखाजोखा गर्‍यो। सम्म परेको भूबनोट हुँदाहुँदै पनि त्यहाँ निकै अवरोध पहिचान गरिए। शौचालय, हात धुने ठाउँ र लुगाधुने ठाउँ पहुँचमा थिएन। सेवा सुविधाका स्थान र प्रकार पहिचान गर्ने सङ्केत थिएन। शिविरका केही क्षेत्रहरू बलौटे थिए र हिँडडुलमा समस्या हुने अपाङ्गता भएका व्यक्तिहरूका लागि कठिन थिए। वर्षा र बाढीको बेला अवस्था झनै खराब हुन्थ्यो।

प्रिफेब्रिकेटेड सेल्टरहरू ल्याइयो। ह्याण्डीक्याप इन्टरनेशनलले अपाङ्गता भएका व्यक्तिहरूका लागि विशेष ध्यान पुर्‍याउन उनीहरूको बसोबासलाई पुनरावलोकन गर्न पैरवी गर्‍यो। दुर्भाग्यवस ती सेल्टरहरूका तल्लो सतह र जमिनको सतहबीचको उचाइ २० सेन्टीमिटर भएको हुनाले तिनीहरू ह्वीलचियरका लागि पहुँचमा भएनन्। बाहिर ह्वीलचियरलाई राख्ने स्थान समेत नहुँदा कतिपय मानिसहरू र्‍याम्प राख्न समेत असफल रहे।

स्पिकर, श्रव्य सन्देशको अभाव, अभिमुखीकरणलाई सहयोग गर्ने स्थान र सेवा वितरण केन्द्रहरूलाई देखाउने सङ्केतहरू नहुनु, पहुँचयुक्त शौचालय नहुनु, दर्ता गर्ने ठाउँमा मानिसलाई बसेर आराम गर्ने ठाँउको अभाव हुनु, समर्पित सूचना केन्द्रको अभाव हुनुलगायत अन्य समस्या पनि पहिचान गरियो।

---

(4) Regional Analysis for Syria (RAS) Report – Brief, May 6 2014, ACAPS (retrieved from http://www.acaps.org/en/pages/syria-snap-project)

(5) Hidden victims of the Syrian crisis – disabled, injured and older refugees, HelpAge International and Handicap International (2014)

## ख१.२ विद्यमान स्वतःस्फूर्त बसोबास

स्वतःस्फूर्त बसोबासमा विस्थापितहरूमध्ये केही एकदमै जोखिममा रहेका व्यक्तिहरू पाइन्छन् । संरक्षण र सहयोग सञ्जाल निर्माण गर्दा सम्भव भएका स्थानमा सुरक्षा र पहुँच उपलब्ध गराउनु तथा बढी जोखिममा रहेका अपाङ्गता भएका व्यक्तिहरूका लागि वैकल्पिक सेल्टर प्राप्त गर्नु मुख्य प्राथमिकता हुन्छ ।

स्वतःस्फूर्त सेल्टरहरूको स्तरोन्तति गर्न अपाङ्गता भएका व्यक्तिहरूका लागि अवरोध र जोखिम घटाउने उपाय कसरी पहिचान गर्ने, प्राथमिकतामा राख्ने तथा कार्यान्वयन गर्ने भन्नेबारेमा तल सिफारिस गरिएका छन् । हेर्नुहोस् अध्याय क२.२ र क३.२ ।

**१: पहिचान** **ख२.१.२**

बसोबासमा अपाङ्गता भएका व्यक्तिहरू पहिचान गर्न अपाङ्गता भएका व्यक्तिका संस्था, शिविर व्यवस्थापक, विभिन्न क्षेत्रका प्रतिनिधिहरूसँग सम्पर्क गर्नुहोस् ।

ठूला बसोबासमा कम्तिमा सङ्क्रमणकालीन उपायकारूपमा सूचनासहितको अपाङ्गता डेस्क स्थापना गर्ने कुरामा ध्यान दिनुहोस् ।

भूस्थिति, जमिनको सतह, निकास कुलो, पालका पङ्क्ति, भग्नावशेष, घाँसपात आवागमनका लागि भौतिक अवरोध हुनसक्छन् । त्योभन्दा अझ पहुँचमा अन्य कुनै हुनसक्छ भने नक्सा बनाउनुहोस् र उल्लेख गर्नुहोस् ।

**२. Transect walk** **ख१.२.२**

बसोबासको आसपास वा वरपर अपाङ्गता भएका व्यक्तिलाईसँगै लिएर हिँड्नुहोस् । भौतिक अवरोध छ कि हेर्नुहोस् । समुदायको दृष्टिकोण पनि हेर्नुहोस् । यसले तपाईँले गरिरहनुभएको हस्तक्षेपमा असर पार्छ । उदाहरणको लागि अपाङ्गता भएका व्यक्तिलाई संलग्न गराइ फोहर व्यवस्थापनका लागि कार्यक्रमसहित जनचेतना अभियान सुरू गर्नुहोस् ।

**३: सम्भावित पुनःस्थान संयोजन** **ख१.२.३**

पहुँच नभएको स्थानका अपाङ्गता भएका व्यक्तिहरूसँग पहुँच भएका स्थानमा जाने सम्भावनाका बारेमा परामर्श गर्नुहोस्, जुन अर्कै क्षेत्रमा जाने हुनसक्छ वा सोही बसोबासको बाहिर वैकल्पिक सेल्टरहरू बनाउने हुनसक्छ ।

**४: सरसफाइ सुविधा** **ख१.२.४**

बसोबासअन्तर्गत सुरक्षा र सेवासुविधामा समान पहुँच सुनिश्चित गर्नुहोस् । सरसफाइ सुविधा र शौचालयमा अनुकूलता प्रदान गर्ने वा सरसफाइसँग सम्बन्धित निकायहरूसँग मिलेर अपाङ्गता भएका व्यक्तिहरूका सेल्टर नजिक पर्नेगरी नयाँ शौचालय बनाउनुहोस् ।

पहुँच भएका शौचालयमा मानव निर्मित प्रकाश उपलब्ध गराउनुपर्छ । (हेर्नुहोस ख१.१.६)

**६: बाधालाई हटाउने** **ख१.२.६**

मुख्य बाटोमा पर्ने भग्नावशेष, घाँसका झाडी, अवरोध गर्नेखालका पालका पङ्क्ति र अन्य अवरोध हटाउनुहोस् । हटाउन नसकिने अवरोध जस्तै भऱ्याङ वा निकास कुलो भएको ठाउँमा बार लगाउने, कुनै सङ्केत राख्ने वा अलि फरकखालको रङ्गले रङ्गाइ दिनुहोस् । वैकल्पिक बाटो, तर्ने ठाउँ वा ऱ्याम्प भएको स्थान देखाउने सङ्केत राखिदिनुहोस् ।

**५: हिँडने बाटोको स्तरोन्नति** **ख१.२.५**

अपाङ्गता भएका व्यक्तिहरू रहेका सेल्टरसँग सम्बन्धित हिँड्ने बाटो र विभिन्न सेवासुविधासम्म पुग्ने रूट पहुँचयुक्त र ह्वीलचियरका लागि मैत्रीपूर्ण हुनुपर्छ । बाटोको सतहलाई ठोस बनाउनको लागि साह्रो ढुंगा वा बालुवा गिटी प्रयोग गर्न सकिन्छ ।

योजनाबद्ध बसोबासमा हिँडने बाटोको लागि थप सिफारिस ख१.१.४. मा पनि हेर्नुहोस् ।
बाँस र डोरीको प्रयोग गरेर साधारण समात्ने बार बनाउन सकिन्छ । प्राविधिक मापदण्डको लागि हेर्नुहोस् ख ३.४.४ ।

**७: आराम गर्ने क्षेत्र** **ख१.२.७**

मुख्य आवतजावत गर्ने रूटमा छहारीसहितका आराम गर्ने ठाउँहरू बनाउनुहोस् । यी सकेसम्म हरेक २०० मिटरको अन्तरमा हुनुपर्दछ । यस्ता ठाउँमा सूचनापाटी राखियो भने अझ राम्रो हुन्छ । (हेर्नुहोस् ख१.१.८)

**८: यातायात** **ख१.२.८**

बसोबास क्षेत्रभन्दा बाहिर रहेका सेवामा अपाङ्गता भएका व्यक्तिको पहुँच बढाउन आवश्यकता पहिचान गर्नुहोस् र आवश्यक पर्नेहरूका लागि यातायातको सहयोग उपलब्ध गराउनुहोस् ।

अपाङ्गता भएका व्यक्तिहरूसँगको परामर्शमा दैनिक क्रियाकलापमा (हेर्नुहोस् ख.१.१.७) आवश्यक पर्ने थप सहयोग पहिचान गर्नुहोस् र व्यक्तिगत सेल्टरलाई सुधार, स्तरोन्नति तथा मर्मत गर्नुहोस् ।

**घटना अध्ययन ,ख१.२**

कालो लाभाको क्षेत्र गोमा हुँदै डेमोक्रेटिक रिपब्लिक अफ कंगोमा पस्यो । भर्खरै सन् २००२ मा उठेको ज्वालामुखी सहरको ४० प्रतिशत क्षेत्र नष्ट गर्‍यो । अझ भर्खरै गोमाले छिमेकी प्रान्त साउथ किभुबाट आएको विस्थापनको एउटा नयाँ छाल देख्नुपरेको छ । कडा चट्टानी ज्वालामुखी माटोमा स्वतःस्फूर्त बसोबास व्यवस्था गरिएका छन् जुन चाहिँ ह्वीलचियर प्रयोग गर्ने व्यक्तिहरूका लागि र हिँडडुलमा सीमित भएका व्यक्तिहरूका लागि अवरोधपूर्ण हुन्छ ।

ह्याण्डिक्याप इन्टरनेशनलले ल्याक भर्ट र बुलेङ्गोमा विभिन्न क्षेत्रको पहुँचको अवस्थाको नक्शाङ्कन गरी शिविर, हिँड्ने बाटा, शौचालय, नुहाउने ठाउँको लेखाजोखा गर्‍यो । शिविरको सबैभन्दा कम पहुँच भएका स्थानमा अपाङ्गता भएका व्यक्तिहरू रहेको पहिचान गरियो र प्राथमिकताका आधारमा सहयोग उपलब्ध गराइयो ।

ह्याण्डीक्याप इन्टरनेशनलले केही राम्रो र सम्म स्थान तथा नजिकै सरसफाइका सुविधा भएका स्थानमा अपाङ्गता भएका व्यक्तिहरूलाई सार्नको लागि सहमति गर्न सफल भयो । व्यक्तिगत आवश्यकताअनुसार अनुकूलता दिन थप प्लास्टिकका सिट र खम्बा उपलब्ध गराइए ।

त्यति नै बेला शिविर व्यवस्थापक, समुदायका अगुवा र सेल्टरमा काम गर्नेहरूमा बसोबाससँग सम्बन्धित विभिन्न भौतिक अवरोधका बारेमा जनचेतना बृद्धि गर्न केही तालिम सत्र सञ्चालन गरियो ।

## ख१.३ सामूहिक केन्द्रको पहुँच

सामूहिक केन्द्रमा रहने अपाङ्गता भएका व्यक्तिहरूले अन्य प्रकारका योजनाबद्ध सेल्टर वा स्वतःस्फूर्त बसोबासमा सामना गर्नुपर्ने जस्तै अवरोध समाना गर्नुपर्छ ।

सामूहिक केन्द्रहरूमा सेल्टर खोजीरहेका अपाङ्गता भएका व्यक्तिहरूको आत्मसम्मान र पहुँचको लागि भौतिक अवरोध तथा व्यवस्थापनका समस्या दुवै सम्बोधन गर्नुपर्ने आवश्यक हुन्छ ।

**१: पहिचान** **ख१.३.१**

सामूहिक केन्द्रहमा बसिरहेका अपाङ्गता भएका व्यक्तिहरूको पहिचान गर्नुहोस् । अवरोध पहिचान गर्न र त्यसलाई सम्बोधन गर्ने उपायका बारेमा अपाङ्गता भएका व्यक्तिहरूलाई संलग्न गराउनुहोस् । (हेर्नुहोस् ख१.२.१)

सामूहिक केन्द्रलाई विपद् पूर्व मानिसहरूलाई सुरक्षित स्थानमा राखिने सेल्टर (Evacuation Center)बनाउने हो भने आधारभूत पहुँचसम्बन्धी उपाय अवलम्बन गर्नैपर्छ । (हेर्नुहोस् क१.४)

आकस्मिक सेल्टरका लागि नबनाइएका कुनै भवनमा रहेको स्वतःस्फूर्त बसोबास सामूहिक केन्द्रमा परिणत हुन्छ भने ख२.३ मा उल्लेखित अनुकूलता प्रदान गर्न सिफारिस गरिन्छ ।

अपाङ्गता भएका व्यक्तिहरूका लागि पुग्न सजिलो हुने स्थान आकस्मिक सवारी साधनहरूको लागि पनि थप पहुँचयुक्त हुनु जरूरी छ ।

**२: अवरोधमुक्त प्रवेशद्वार** **ख१.३.२**

तलको तलासम्म आइपुग्ने मार्ग मुख्य बाटोदेखि नै पहुँच भएको हुनुपर्छ । र्‍याम्प राखिएको हुनुपर्छ निजी सेल्टरभन्दा सामूहिक सेल्टरमा बनाइने र्‍याम्प फराकिलो हुनुपर्छ (कम्तिमा १५० सेन्टिमिटर चौडा) ।



**३: आन्तरिक गमनशील** **ख१.३.३**

र्याम्प निर्माण गरेर, सीमा हटाएर, सतहलाई सम्म पारेर र प्रवेश मार्गमा ह्वीलचियर सजिलै जानसक्छ भन्ने सुनिश्चित गरेर जमिनको तल्लाको सबै भौतिक अवरोधलाई सम्बोधन गर्नुहोस् ।

कुनै हिँडडुलमा समस्या हुने व्यक्ति र ह्वीलचियर प्रयोग गर्ने व्यक्तिका लागि तल्लो तलामा सेल्टर उपलब्ध गराउन सकिँदैन भने उनीहरूका लागि सेल्टरको अर्को वैकल्पिक व्यवस्था गर्नुपर्छ (परिवार सदस्य र हेरचाह गर्ने व्यक्तिसहित)

**४: सरसफाइमा पहुँच** **ख१.३.४**

पानीको धारा, शौचालय र नुहाउने स्थानहरू जस्ता सरसफाइका सुविधा अपाङ्गता भएका व्यक्तिहरूले सहजै उपयोग गर्न सक्नेगरी छन् भन्ने सुनिश्चित गर्नुहोस् । यस्ता सुविधा पहुँचमा छन् भनी सङ्केत राख्नुहोस् ।

**५: बाधा हटाउने** **ख१.३.५**

हिँडडुल गर्ने बाटोबाट फोहरमैला हटाइ पहुँच बढाउनुहोस् । आगोबाट सुरक्षित राख्नुहोस् । कुनै विपद् पूर्व सुरक्षित स्थानमा लैजानको लागि गरिने र पूर्व सूचना दिने योजनामा अपाङ्गता भएका व्यक्तिहरूलाई ध्यान दिनुहोस् (हेर्नुहोस क१.३.) ।

**६: प्रकाशको व्यवस्था** **ख१.३.६**

सबै सार्वजनिक स्थान र अँध्यारो हुने करिडोरमा प्रकाशको व्यवस्था गरिएको (जसमा झ्याल राखिएको), बत्तिहरू जडान गरिएको र प्रकाशलाई अधिकतम गर्न सरसफाइ गरिएको, बल्बहरू जडान गरिएको सुनिश्चित गर्नुहोस् ।

फरक देखिने रङ्ग र मानव निर्मित प्रकाशले पनि हिँडडुलमा समस्या हुने र दृष्टिसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरूका लागि प्रवेशमार्ग र भर्‍याङलाई थप सहज बनाउँछ ।

**७: दैनिक क्रियाकलाप** **ख१.३.७**

अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श गरी दैनिक क्रियाकलापलाई थप पहुँचयुक्त बनाउन उपलब्ध गराउनुपर्ने सहयोगको प्राथमिकता पहिचान गर्नुहोस् । उत्पादित फोहरमैलालाई व्यवस्थापन गर्ने एउटा प्रणाली निर्माण गर्नुहोस् र सेल्टरका सबैलाई त्यसमा सहभागी गराउनुहोस् ।

**अन्य अध्यायमा रहेका सम्बन्धित सिफारिस**

⇒ थप प्रकाश र पहुँच भएका बत्तिको स्विच (हेर्नुहोस् ख२.२.९ र ख२.३.७)

⇒ ब्ल्याङ्केट, सुकुल, खाट, पार्टेसन म्याट र घरायसी सामान (ख३.२)

**८ : प्रतिनिधित्व** **ख१.३.८**

अपाङ्गता भएका व्यक्तिहरू सामूहिक केन्द्रमा रहेका छन् भने सामूहिक क्रियाकलापमा उनीहरूको सहभागिता र भवन समितिमा प्रतिनिधित्व प्रवर्द्धन गर्नुहोस् । भवन समितिहरूले अपाङ्गता सम्बन्धमा तालिम लिनुपर्छ ।

**९: कर्मचारी र स्वयंसेवक** **ख१.३.९**

अपाङ्गता भएका व्यक्तिहरूलाई सूचना दिन र सम्बोधन गर्नुपर्ने अवरोध एवं संरक्षणका समस्या पहिचान गर्न दैनिकजसो सामूहिक केन्द्रको भ्रमण का लागि तालिमप्राप्त कर्मचारी र स्वयंसेवक पठाउनुहोस् ।

रेडक्रस र रेडक्रिसेन्ट आन्दोलनका धेरै राष्ट्रिय सोसाइटीले विपद्पूर्व मानिसहरूलाई राख्ने सुरक्षित सेल्टर (Evacuation Shelter) र सामूहिक केन्द्र व्यवस्थापन गर्ने स्थानीय मार्गनिर्देशिका निर्माण गरेका छन् । तपाईँले थप अध्ययनको लागि त्यसमा केही दृष्टान्त पाउनुहुनेछ (पृष्ठ ३५) ।

**घटना अध्ययन , ख१.३**

वासी नाम गरेको गम्भीर तातो आँधीले डिसेम्वर १६ र १८, २०११ मा फिलिपिन्सलाई हान्यो । सीबीएमको साझेदार द फिलिपिन्स सर्भिस अफ मर्सी फाउन्डेसन तत्काल घटनास्थलमा अवस्थाको लेखाजोखा गर्न र अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्न पुग्यो ।

आँधी आएको चार दिनपश्चात २०००० प्रभावित मध्ये १२० जनामात्र अपाङ्गता भएका व्यक्तिहरू भेटिए जसले विपद् पूर्व मानिसहरूलाई राख्न बनाइएको निश्चित सुरक्षित स्थानमा (Evacuation Center) आस्रय लिन चाहेका थिए । कमजोर पहुँचको अवस्था एउटा कारण थियो र अपाङ्गता भएका व्यक्तिहरूलाई भिडले ठेलेर पनि पछाडि पारेको थियो । यसकारण धेरैजसोले राहतका सामग्री पाउनबाट बञ्चित हुनुपर्छ भन्ने जान्दाजान्दै पनि पुन: भत्किएको संरचनाहरूतिरै फर्कन चाहे ।

काग्यान डे ओरोमा रहेको अपाङ्गता भएका व्यक्तिहरूको संस्थाले राहतका गतिविधिमा अपाङ्गता भएका व्यक्तिहरूको राम्रो समावेशीकरणको लागि स्थानीय अधिकारीहरूसँग लवि र पैरवी गर्‍यो । विपद्को एक महिनापछि नगरप्रमुखले सहरका प्रत्येक इभ्याकुएसन सेन्टरको लागि "Order with Immediate effect" जारी गरे जसमा प्रत्येकले अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्न र यस विषयमा जनचेतना जगाउन अपाङ्गता डेस्क स्थापना गर्नुपर्ने आदेश थियो । इभ्याकुएशन सेल्टरमा आवश्यक अनुकूललाई वेवास्ता गरिएको थियो किनभने अपाङ्गता भएका व्यक्तिहरूले पहिले नै छोडिसकेका थिए । आशा गरौँ भविष्यमा हुने यस्ता आकस्मिक अवस्थामा भौतिक पहुँच र अपाङ्गता डेस्कको संयुक्त उपस्थिति रहनेछ ।

# थप अध्ययनको लागि

⇒ CBM (2012), *Inclusion Made Easy: A quick program guide to disability in development.* http://www.cbm.org/Inclusion-Made-Easy-329091.php

⇒ Chalinder, A. (1998), *Temporary Human Settlement Planning for Displaced Populations in Emergencies - RRN Good Practice Review 6*. http://www.odihpn.org/download/gpr6pdf

⇒ Handicap International (2005), *Shelter, public infrastructure, water and sanitation. A guide for including people with disabilities and injuries*.

⇒ Handicap International (2012), *Accessibility Assessment of Zaatari Refugee Camp*. https://data.unhcr.org/syrianrefugees/download. php?id=1558

⇒ IOM and UNHCR (2010), *Collective Centre Guidelines*. http://www.globalcccmcluster.org/system/files/publications/ doc18990-contenido.pdf

⇒ Jones, H. & Wilbur, J. (2014), *Compendium of accessible WASH technologies*. http://http://www.inclusivewash.org.au

⇒ NRC (2008), *Camp Management Toolkit*. http://www.nrc.no/camp

## रूजु सूची ख१ : बसोबासका लागि मापदण्ड

⇒ समावेशी बसोबासको डिजाइनको लागि शिविर व्यवस्थापक, अपाङ्गता भएका व्यक्तिका संस्था र विभिन्न क्षेत्रका प्रतिनिधिसँग सम्बन्ध स्थापना गरिएको छ ।

⇒ अवरोधको पहिचान गर्न र पहुँचसहितको सुधारलाई प्राथमिकतामा दिन सबै उमेरका अपाङ्गता भएका केटाकेटी, महिला तथा पुरूषलाई संलग्न गराइएको छ ।

⇒ बसोबासको व्यवस्थापन गरिएको स्थान अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँचमा छ तथा सेवा र जीवनयापनसम्बन्धी अवसरसँग जोडिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई हिँडडुल गर्न स्थान तुलनात्मक रूपमा समथर, चौडा (बढीमा १:२० देखि १:५० को अनुपातमा भिरालो) र निकासको व्यवस्था गरिएको छ ।

⇒ मुख्य आवतजावत गर्ने बाटो कम्तिमा १५० मिटर चौडा, अवरोधमुक्त र १०० देखि २०० मिटरको फरकमा आराम गर्ने छहारी राखिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिका लागि सेल्टरहरू सेवा सुविधा र सहयोग सञ्जालका नजिक व्यवस्था गरिएका छन् ।

⇒ पानीको व्यवस्था गरिएका स्थान र कम्तिमा १० प्रतिशत शौचालय (महिला र पुरूष दुवै) अपाङ्गता भएका व्यक्तिहरूको पहुँचमा बनाइएका छन् ।

⇒ अँध्यारो भाग वा रातीको समयमा सुरक्षा र पहुँच बृद्धि गर्न मानव निर्मित प्रकाशको व्यवस्था गरिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूको लागि अभिमुखीकरण गर्नको लागि ठेगाना प्रणाली लागू गरिएको छ र व्यक्तिगत फलोअप सेवा पनि दिइएको छ ।

⇒ सामूहिक केन्द्रको माथिल्लो तलामा आस्रय लिइरहेका अपाङ्गता भएका व्यक्तिहरूको लागि वैकल्पिक समाधानका उपाय उपलब्ध गराइएको छ ।

⇒ आकस्मिक चरणमा अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्न तालिमप्राप्त कर्मचारी वा स्वयंसेवकसहित पहुँचसहितका सूचना केन्द्र उपलब्ध छन् ।

⇒ बसोबास क्षेत्र/ सामूहिक केन्द्रभित्र मुख्य स्थानहरूमा ट्याकटायल नक्सा र पहुँचसहितका सूचनापाटी उपलब्ध छन् ।

⇒ बसोबास क्षेत्रका खेलमैदान, सार्वजनिक र शैक्षिक सुविधा अपाङ्गता भएका बालबालिकाका लागि पहुँचमा छन् ।

⇒ समुदायका बैठक, वितरण, फोहर व्यवस्थापन र बसोबासका अन्य सेवा र क्रियाकलापमा पहुँच प्राप्त गर्न अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग प्रदान गरिएको छ ।

⇒ बसोबास क्षेत्रको बाहिर सेवा लिन र जीवनयापनका काम गर्न अपाङ्गता भएका व्यक्तिहरूका लागि यातायातसहितको सहयोग उपलब्ध गराइन्छ ।

⇒ अपाङ्गता भएका महिला र पुरूष समुदायका बैठकमा सहभागी हुन्छन् र उनीहरूप्रतिका दृष्टिकोणजन्य अवरोध न्यूनीकरण गर्न विभिन्न उपाय अवलम्बन गरिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई सेल्टर र बसोबासको भैपरी आउने योजनामा संलग्न गराइन्छ र इभ्याकुएसनको योजना बनाउँदा र पूर्वचेतावनी प्रणाली डिजाइन गर्दा सहभागी गराइन्छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई पृष्ठपोषण संयन्त्रमा पहुँच छ र सहभागी गराइएको छ ।

समावेशी समुदाय बनाउनको लागि सेल्टर र यसको वरिपरिको वातावरण सुरूवात बिन्दु हो । डिजाइनबाट नै अपाङ्गता भएका व्यक्तिहरू स्वतन्त्ररूपमा हिँडडुल गर्न र सहभागी हुन सक्छन् वा सक्दैनन् भन्ने निर्धारण हुन्छ ।

# ख२ सेल्टरका लागि मापदण्ड

अधिकांश कुरा अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा नहुने हुनाले संसारभरि नै निजी र सार्वजनिक भवनहरूमा भौतिक अवरोध विद्यमान छन् । संकटको बेलामा अपाङ्गता भएका व्यक्तिहरू सुरक्षित स्थानमा जान सकेनन् भने वा आकस्मिक सेल्टर पाउन सकेनन् भने उनीहरूका लागि जीवन र मरणको सवाल हुन्छ । पहुँचमा बृद्धि गर्न प्रायः निर्माण पश्चात खर्चिला मर्मत र सुधार गरिन्छ । यसको सट्टामा सबै निजी र सामूहिक सेल्टर न्यूनतम मापदण्डसहित अवरोधमुक्त बनाइनुपर्छ । पुनःनिर्माण र यस्ता कुराको पहुँच भएका डिजाइन र सुधारमार्फत यस अध्यायले अवरोधमुक्त सेल्टरहरूका लागि प्राविधिक मार्गदर्शन प्रदान गर्छ । सँधै जस्तो यहाँ कुनै विश्वव्यापी समाधान छैन । त्यसैले आफ्नै स्थानीय लक्षित समूहको आवश्यकता र प्राथमिकताका आधारमा अनुकूल र समाधान खोज्नुपर्छ ।

**यस अध्यायमा संलग्न गरिएका विषयवस्तु**

**ख२.१ पाल समाधान (आइएफआरसी मापदण्डमा परिवार पाललगायत )**

यो एकदमै अस्थायी प्रकृतिको सेल्टरको रूप हो जसको लागि न्यून लागतको अनुकूलता जरूरी हुन्छ । पहुँचमा अभिबृद्धि गर्ने उपाय खास गरेर जमिनमा अपनाइन्छ जुन स्थानीयस्तरमा उपलब्ध समाधानको आधारमा हुन्छ । (पृष्ठ ८४)

**ख२.२ पहुँच भएका सेल्टर डिजाइन :**

सङ्क्रमणकालीन, प्रगतिशील र मुख्य सेल्टरहरू स्तरोन्नतिको सम्भावनासहित प्रायः ३ देखि ५ वर्षका लागि लक्षित गरिन्छ । पहुँच र सहभागिताको लागि ठूलै लगानी जरूरी हुन्छ । (पृष्ठ ८७)

**ख२.३ अनुकूल विद्यमान संरचना :**

व्यक्तिगत सेल्टरको लागि उपलब्ध स्रोत र आवश्यकताका आधारमा अस्थायी र स्थायी दुवै प्रकारका समाधानमा ध्यान पुर्‍याउन सकिन्छ । सार्वजनिक भवनहरूमा भने पहुँचमा बृद्धि गर्दा दीर्घकालीनरूपमा लाभ हुन्छ । (पृष्ठ ९२)

## खर.१. पाल समाधान (*आइ.एफ.आर.सी. मापदण्डका परिवार पाल लगायत*)

यस अध्यायमा अपाङ्गता भएका व्यक्तिहरूलाई आकस्मिक पाल उपलब्ध गराउँदा ध्यान दिनुपर्ने कुरामा केन्द्रित गरिनेछ । पाललाई अपाङ्गता भएका व्यक्तिहरूका लागि कसरी पहुँचमा पुर्याउने भन्ने विषयमात्र होइन यस्ता पाल अपाङ्गता भएका व्यक्तिले कसरी प्राप्त गर्छन्, कसरी ढुवानी गर्छन् र कसरी उठाउँछन् भन्ने विषय पनि महत्वपूर्ण हुन्छ । (थप सिफारिसको लागि ख३.३ मा हेर्नुहोस् )

**१: सम्बन्धित स्थलमा पहुँच** **खर.१.१**
सेल्टर राख्ने स्थान सफा राख्नुहोस् । फोहर र भग्नावशेष हटाउनुहोस् । स्थानको सतहसम्म र निकाससहितको छ भन्ने कुरा सुनिश्चत गर्नुहोस् ।

**२: अवरोधमुक्त प्रवेशमार्ग** **खर.१.२**
प्रवेशमार्गमा कुनै प्रकारको सीमा वा खुड्किला नराख्नुहोस् । यो कुरा इभ्याकुएसनको लागि पनि त्यतिकै महत्वपूर्ण छ । पाल जडान गर्दा यसका डोरीले आवागमन र पहुँचलाई अवरोध नगरून् भन्ने कुरामा ध्यान दिनुहोस् ।

पालको खुला भाग केही तल भिरालोतिर फर्केको (Facing downslope) भयो भने पहुँचसहितको बनाउन सहज हुन्छ र पालको अगाडि पानी निकास गर्ने कुलो बनाउनुपर्ने खासै आवश्यकता नपर्न सक्छ ।

**३: माटाको चाक्लो** **खर.१.३**
अझै पनि पानी निकासको लागि कुनै कुलो बनाउनुपर्ने जरूरी भयो भने ह्विलचियर प्रयोगकर्तालाई उक्त ठाउँ तर्नको लागि तेर्सो पारेर माटोको चाक्लो वा ह्वीलचियर र्‍याम्म निर्माण गर्नुहोस् ।

**४: फरक रङ्ग** **खर.१.४**
दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिहरूलाई अरू पालको तुलनामा आफ्नो पाल चिन्नको लागि ढोकामा टेक्सटाइल रङ्ग दिनु राम्रो हुन्छ । यसको लागि ढोकालाई सङ्केत गर्न रङ्गिन टेपको (५



**५: खुल्ने संयन्त्र** **ख२.१.५**

पाल खुल्ने र बन्द गर्ने तरिका पहिचान गर्नुहोस् । उदाहरणको लागि खोल्ने बन्द गर्ने जिप (Zip) मा डोरी वा सानो लठ्ठी जडान गर्नुहोस् । उपयुक्त संयन्त्रको लागि अपाङ्गता भएका व्यक्तिसँग परामर्श गर्नुहोस् ।




**६: घुम्न चाहिने स्थान** **ख२.१.६**

पाल निकै ठूलो आकारको (परिवार बस्न मिल्ने) छ भने भित्र ह्वीलचियर प्रयोग गर्ने व्यक्तिलाई ह्वीलचियर घुमाउन पर्याप्त स्थान छ (१५० सेन्टीमिटर ब्यास) भनी सुनिश्चित गर्नुहोस् ।




एउटा नमूना पाल विभिन्न वर्गका स्थानीय अपाङ्गता भएका व्यक्तिसहितको संलग्नतामा उठाउनुहोस् । पहुँचमा अवरोध हुने कुरा पहिचान गर्ने तथा डिजाइनमा सुधार गर्न र अनुकूलताका तरिकाका बरेमा छलफल गर्नुहोस् ।

हिँडडुलमा सीमितता भएका अपाङ्गता भएका व्यक्तिहरूलाई ढोकाका फ्रेमहरू र ठाडा खम्बाहरूले पालमा पस्दा, भित्र यताउता हिँड्दा समाउनका लागि काम दिन्छन् ।

**७: भित्रको बेरा/छेकबार** **ख२.१.७**

निजी वा गोपनीयता सुनिश्चित गर्न पालको भित्रको छेकबार (Partition ) लगाउन थप सामग्री उपलब्ध गराउनुहोस् ।

**८: न्यानोपन** **ख२.१.८**

सङ्क्रमणकालीन सेल्टरमाभन्दा पालमा न्यानोपन सुनिश्चित गर्न निकै कठिन हुन्छ । सेड नेट (Shade Nets ) वा बस्ने सुविधासहितको छहारी भएको बाहिरी क्षेत्रको प्रयोगमा ध्यान

**९: स्थलगत सहयोगी** **ख२.१.९**

माथि गरिएका सिफारिसका आधारमा पाल उठाउन अपाङ्गता भएका व्यक्तिहरूका लागि व्यवहारिक सहयोग उपलब्ध गराउनुहोस् । स्तरोन्नति र मर्मतसँग सम्बन्धित आवश्यकताका लागि पालको नियमित जाँच गर्न स्वयमसेवक पठाउनुहोस् ।

**घटना अध्ययन, ख२.१**

यस अध्यायमा समावेश गरिएका चित्र र सिफारिस UNCHR, ICRC, IFRC को परिवार बस्ने पाल (Family Tent)मा आधारित छ । मापदण्डअनुसारको परिवार पाल मानवीय आकस्मिकतामा अस्थायी सेल्टरका रूपमा व्यापक उपयोग गरिन्छ । यो दीर्घकालीन समाधान होइन, तर एक वर्ष टिक्न सक्छ ।

गर्मी र तापक्रम बढी भएको हावापानीलाई लक्षित गरेर पाल बनाइन्छ । जाडोमा उपयोग गर्ने सामग्री (Winterisation Kits)ले जाडोको बेलामा यसबाट बच्न थप मद्दत गर्छ ।

पालभित्रको खुल्ला भाग कम्तिमा १ मिटर चौडा र १.५५ मिटर उचाइको हुन्छ तथा बीचमा ठाडो खम्बा हुन्छ । सामग्री नरम र लचिलो हुन्छ, जसले गर्दा ह्वीलचियर पनि सहजै प्रवेश गर्न सक्छ । ढोका खोल्नको लागि सहयोगको आवश्यक पर्छ । ढोका खोल्न र बन्द गर्न जिपर (Zipper)को प्रयोग गरिएको हुन्छ, जुन केही अपाङ्गता भएका व्यक्तिहरूको लागि कठिन पनि हुनसक्छ । झ्यालमा भने Velcro को प्रयोग गरिएको हुन्छ, जुन संचालन गर्न सजिलै हुन्छ ।

आइ.एफ.आर.सी., आइ.सी.आर.सी. र यू.एन.एच.सी.आर.ले पाल अनुसन्धान तथा विकास परियोजनामा काम गरिरहेका छन् र नयाँ थप स्तरोन्नति गरिएका डिजाइन सन् २०१५ को मध्यसम्ममा प्राप्त गर्न सकिने अपेक्षा गरिएको छ । नयाँ परिवार पालमा पहुँचलाई थप ध्यान दिइएको छ र ढोका १ मिटर चौडा रहेको छ जुन अवरोधमुक्त छ । ढोकामा पनि जिपरको सट्टा Velcro प्रयोग गरिएको छ, जुन अपाङ्गता भएका व्यक्तिहरूको लागि खोल्न र बन्द गर्न सजिलो हुन्छ ।

(१) More details can be found in the IFRC/ICRC Emergency Items Catalogue (http://procurement.ifrc.org/catalogue/), product code HSHE-TENTF16C.

## ख२.२ पहुँच भएका सेल्टरको डिजाइन बनाउने

आफ्ना घर पूरै गुमाएका र फर्कन नसक्ने अवस्थामा रहेका मानिसहरूका लागि नयाँ सेल्टर दीर्घकालीन समाधानको एउटा माध्यम बन्न सक्छ। सेल्टर बनाउन सस्तो र छरितो हुनुपर्छ। समय बित्दै जाँदा सुधार गर्न र व्यक्तिगत अनुकूल बनाउन सकिने हुनुपर्छ। असुरक्षित जमिनको उपयोग (कहिलेसम्म जमिन उपयोग गर्न पाइने भन्ने कुरा स्पष्ट नभएको)सहितको अस्थायी सेल्टरहरूको लागि सङ्क्रमणकालीन सेल्टर एउटा साझा समाधान हुनसक्दछ। किनभने यस्ता सेल्टर हटाउन र अर्को ठाउँमा पुनः उपयोग गर्न सकिने हुन्छन्। प्रगतिशील सेल्टर र मुख्य सेल्टर (Core Shelter) भने बढी स्थायित्वको सम्भावना हुने स्थानमा स्तरोन्नति र विस्तार गर्न सकिन्छ।

तलका सिफारिसले विपद् पश्चातका सेल्टर पहुँचका र अवरोधमुक्त बनाउन ध्यान पुर्‍याउनुपर्ने कुरालाई प्रस्तुत गर्छन्।

योजना र कार्यान्वयनको लागि लाग्ने समयको कारणले यी क्रियाकलाप विपद् प्रतिकार्यभन्दा पनि शीघ्र पुनः प्राप्ति (Early Recovery) सँग सम्बन्धित छन्। सेल्टरको डिजाइन र निर्माण सहभागितामूलक तरिकाले कार्यान्वयन गरिनुपर्छ, जहाँ अपाङ्गता भएका व्यक्तिहरूसँग पनि परामर्श लिइन्छ र अन्तिम डिजाइनसम्म पनि उनीहरुको प्रभाव रहन्छ।

**१: सम्बन्धित स्थानमा पहुँच** **ख२.२.१**

सेल्टर राखिएको क्षेत्र र प्रवेशमार्गहरूमा कुनै प्रकारको फोहर वा भग्नावशेष भए हटाउनुहोस्। राम्रो निकासको व्यवस्थासहितको सम्म एकनासको स्थान छ भन्ने सुनिश्चित गर्नुहोस्। (हेर्नुहोस् ख१.१.२)

सेल्टरको तल्लो भागको सतह र सेल्टरबाहिर जमिन बीचको उचाइ सकेसम्म न्यूनतम गर्नुहोस्। त्यहाँ कुनै भिरालोपन रहेछ भने भिरालो भागको माथितिर सेल्टरको ढोका राखेर भिरालोपनको फाइदा लिने प्रयास गर्नुहोस्।



**२: र्‍याम्प (निजी सेल्टर)** **ख२.२.२**

प्रवेशमार्गसम्म पुग्न र्‍याम्पको आवश्यक छ भने प्रदान गर्नुहोस्, जुन बढीमा १:१० वा १:१२ को अनुपातमा भिरालोपन भएको, बढीमा ९० सेन्टिमिटर चौडा, ५ देखि १० सेन्टिमिटर कर्व (curb ) र नचिप्लने सतह भएको हुनुपर्छ।

**३: छानोसहितको बरण्डा** **ख२.२.३**

डिजाइनमा पर्ने ठाउँमा एउटा छानोसहितको बरण्डा समावेश गराउनुहोस्, जुन न्यूनतम १५० सेन्टिमिटर चौडा हुनुपर्दछ र यसबाट ह्वीलचियर प्रयोगकर्तालाई ह्वीलचियर घुमाएर ढोका खोल्नको लागि सहज हुनेछ।

**४: समात्ने बार** **ख२.२.४**

हिँडडुलमा समस्या हुने र दृष्टिसम्बन्धि समस्या भएका व्यक्तिहरूलाई सुरक्षा तथा पहुँच उपलब्ध गराउन र्‍याम्पमा र प्रवेश गर्ने स्थानमै बनाइएको बरण्डा (Porch ) मा समात्ने बार लगाउनुहोस्।




(२) यो सिफारिस निजी सेल्टरहरूको लागि हो। सार्वजनिक भवनहरूमा भने दुईवटा ह्वीलचियर एकअर्कामा क्रस हुन मिल्ने चौडा र्याम्प चाहिन्छ (१५० सेमिभन्दा बढी)।

**५: अवरोधमुक्त प्रवेशद्वार** **ख२.२.५**

बिना कुनै अवरोध प्रवेश गर्ने स्थानको खुल्ला भाग कम्तिमा ९० सेन्टिमिटर बनाउनुहोस् ।




**६: फरक देखिने रंग** **ख२.२.६**

प्रतिबिम्बित वा प्रकाश परावर्तन नहुनेखालका सामग्री उपयोग गर्नुहोस् र सेल्टरको प्रवेशद्वारमा फरक तथा प्रष्ट चिनिनेखालको रङ्ग लगाउनुहोस् । यसबाट दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिहरूलाई पहिचान गर्न सहज हुन्छ । (हेर्नुहोस् ख२.१.४)

ह्वीलचियर विभिन्न आकार र प्रकारमा हुन्छन् । ह्वीलचियर गुडाउँदा अगाडि थ्रेसहोल्ड हुनसक्छ । स्थानीय नमूनासँग परीक्षण गर्नुहोस् र अधिकतम साइजको छनौट गर्नुहोस् ।

**७: पहुँचयुक्त समात्ने ह्याण्डल** **ख२.२.७**

झ्यालढोका हलुका र खोल्नबन्द गर्न सजिलो हुनेगरी पहुँचसहितका ह्याण्डल भएका राख्नुहोस् । आवश्यकताअनुसार सबै प्रकारका अपाङ्गता भएका व्यक्तिले प्रयोग गर्न सक्ने हुनुपर्छ ।



**८: प्रकाश** **ख२.२.८**

पहुँचमा भएका स्वीचसहित सेल्टरको भित्रबाहिर र शौचालयमा प्रकाशको व्यवस्था गर्नुहोस् ।

**९: आन्तरिक आवतजावत** **ख२.२.९**

सेल्टरभित्र ह्वीलचियर चलाउन र घुमाउन मिल्ने स्थान भएको सुनिश्चित गर्नुहोस् । भित्र वरिपरि समात्ने बार राख्दा दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिहरूलाई आवतजावतमा अझ सहज हुन्छ ।

**१०: न्यानोपन/वातानुकूल (Thermal Comfort)**

सेल्टरभित्र न्यानोपन र स्वास्थ्यकर अवस्थाको लागि प्राकृतिक भ्यान्टिलेसन प्रणालीमा ध्यान दिनुहोस् । तातो हावापानीमा अत्याधिक तातोबाट बच्न सेड नेट (Shed Nets ) को उपयोग गर्नुहोस् ।

अधिकांश समय सेल्टरभित्र बिताउने अपाङ्गता भएका व्यक्तिहरूको न्यानोपन, प्राकृतिक प्रकाश र भ्यान्टिलेसन प्रणालीमा विशेष ध्यान पुर्‍याउनुपर्छ ।

**११: कार्यस्थानको सतह** **ख२.२.११**

जमिनबाट काम गर्ने ठाउँको सतहको उचाइ उपयुक्त हुनुपर्छ र ह्वीलचियर प्रयोग गर्ने व्यक्तिलाई खुट्टा राख्न पर्याप्त स्थान हुनुपर्छ ।




बारम्बार प्रयोग गरिने उपकरणहरू वरिपरि घुम्नको लागि पर्याप्त स्थान उपलब्ध हुनेगरी उपयुक्त स्थानमा राख्नुहोस् ।

अपाङ्गता भएका व्यक्तिहरूका लागि सेल्टरसँगै गरिने थप सहयोग अन्तर्गत खाट र सुकुल पनि पर्छन् । मर्मतसम्भार र जाडोको बेला न्यानो बनाउने (Winterization ) सहितका सहयोग पनि पर्छन् ( ३)। (हेर्नुहोस् ख३.२)

घरेलु सुरक्षामा सुधार गर्न अन्य उपायमासमेत ध्यान पुर्‍याउनुहोस् । अपाङ्गता भएका व्यक्तिका सम्भावित जोखिम र त्यसलाई कसरी सम्बोधन गर्ने भन्ने विषयमा संस्थाहरूसँग परामर्श गर्नुहोस् ।

अन्य सेल्टर उपलब्ध गराउनेसँग पनि साझा मापदण्डमा सहमति कायम गर्नुहोस् । धेरैजसो मापदण्डहरू स्थायी प्रकृतिका पुनःनिर्माणमा पनि उपयोगी हुनेछन् ।

(३) Witerization भन्नाले ब्ल्याङ्केट, कपडा र स्टोभलगायत विभिन्न उपायमार्फत जाडोमा सेल्टरमा न्यानो बनाउने प्रक्रिया हो ।

**घटना अध्ययन ख२.२**

ह्याण्डीक्याप इन्टरनेशनलले हाइटीको पेटिटगोआभ भन्ने ठाउँमा सन् २०१० मा आएको भूकम्पका बेला १ हजार ५० वटा संक्रमणकालीन सेल्टर उपलब्ध गराएको थियो । ती सेल्टरहरू परम्परागत घरहरू बनाउने तरिकाले बनाइएका थिए । तिनमा भूकम्प र आँधीहुरीलाई सामना गर्ने उच्च क्षमता थिए । सुरूमा एउटा नमूना सेल्टर बनाइयो र अपाङ्गता भएका व्यक्तिहरूबाट पृष्ठपोषण लिइयो । त्यसपछिमात्र त्यसको अन्तिम ढाँचा तयार गरियो ।

पहुँचको समाधानअन्तर्गत प्रवेशद्वारसम्म पुग्ने कम भिरालो र्‍याम्प, कुनै अवरोध नभएको ८६ सेमी चौडा ढोका, अगाडि र पछाडिको भागमा खोल्न सजिलो हुने झ्याल पर्छन् । थप विशेषतामा व्यक्तिगत आवश्यकताअनुसार जस्तै समाउने बार, मार्गनिर्देश गर्ने डोरी, ढोकामा ठूला समाउने ह्याण्डल उपलब्ध गराउन सकिन्छ ।

सबै सेल्टरहरूमा प्रवेशद्वारको अगाडि एउटा छानोसहितको सानो खुल्ला ठाउँ (Shaded Porch ) हुन्छ । हरेक परिवारका लागि शौचालय उपलब्ध हुन्छ । सेल्टर र शौचालयको बीचमा अपाङ्गता भएका व्यक्तिहरू सहजै आवतजावत गर्न मिल्नेगरी एउटा बाटोले जोडिएको हुन्छ ।



## ख२.३ विद्यमान संरचनामा अनुकूलता

आकस्मिकताका अवस्थामा सामूहिक सेल्टर बनाउने प्रयोजनको लागि विद्यालय, अस्पताल, इभ्याकुएशन सेन्टर, अर्थोपेडिक भवन र भाडामा लिइएका सेल्टरलाईसमेत उपयोग गर्न सकिन्छ भनी यस अध्यायमा सिफारिस गरिएको छ।

हरेक भवनको आकार र वरिपरिको वातावरण अलग्गै हुन्छ। सबैमा मिल्ने एकै प्रकारको कुनै समाधान हुँदैन। तपाईंको समाधान दिने अवधारणा वा पद्धति परिस्थिति, निजी सेल्टरमा व्यक्तिगत पहुँचसँग सम्बन्धित आवश्यकता अनुकूल हुनुपर्छ।

हस्तक्षेप उल्टाउनु पर्ने हो, होइन निर्धारण गर्नुहोस्। अस्थायी अनुकूलतामा मुख्य गरेर प्रकाश र सस्तो समाग्रीहरू पर्छन्। स्थायी समाधानको लागि केही उच्च लागत लाग्छ। फरक सामग्री र डिजाइनको उपयोग गरिन्छ। लामो समयका लागि भरपर्दो समाधानका निम्ति कुनै समाधान निकालिँदैछ भने छोटो अवधिको लागि एकठाउँबाट अर्कोठाउँमा लैजान सकिने र्‍याम्प (Moveable Ramps ) को उपयोग गर्न सकिन्छ।

**१: सम्बन्धित स्थानमा पहुँच** **ख२.३.१**

विभिन्न संरचनामा अपाङ्गता भएका व्यक्तिहरू कसरी पुग्छन् भन्ने बारेमा ध्यान दिनुहोस् (अथवा प्रयोग गरिएका कुनै बाह्य संरचना जस्तै भान्साघर, शौचालय, नुहाउने घर)। यस्ता स्थानलाई कुनै भग्नावशेष, फोहरमैला वा अवरोधबाट मुक्त राख्नुपर्छ।

**२: अवरोधमुक्त प्रवेश मार्ग** **ख२.३.२**

प्रवेशमार्ग ह्वीलचियरको लागि पहुँचयुक्त बनाउन र्‍याम्प निर्माण गर्नुहोस् (हेर्नुहोस् ख२.२.२)। सार्वजनिक प्रयोजनका लागि निर्माण गरिने र्‍याम्प कम्तीमा १५० सेन्टिमिटर हुनुपर्छ।

स्थान अभावका कारण तपाईंले र्‍याम्प राख्न सक्नुभएन भने वैकल्पिक प्रवेश मार्गको बारेमा जाँच गर्नुहोस्।

**३: समात्ने बार** **ख२.३.३**

र्‍याम्प र भर्‍याङका लागि समात्ने बारहरू राख्नुहोस् (हेर्नुहोस् ख २.२.४)। भर्‍याङको र तह परिवर्तन गरिएको स्थानको दुवैतर्फ समात्ने बार राख्नुहोस्।

**४: ढोकाको खुल्ला भाग** **ख२.३.४**

ढोकाको खुल्ला भाग कम्तीमा ९० सेमी चौडा हुनुपर्छ (हेर्नुहोस् ख२.२.५)। ढोका र झ्यालमा पहुँचसहितका समात्ने ह्याण्डल हुनुपर्छ।

**५: आन्तरिक आवतजावत** **ख२.३.५**

तलको जमिन वा सतहलाई सम्याएर, र्‍याम्पहरू बनाएर र थ्रेसहोल्ड (सतहको बीचबीचमा अलिकति उठेका भाग) हटाएर सेल्टरको भित्रपट्टीको अवरोधलाई न्यूनीकरण गर्नुहोस् अथवा सेल्टर र बाहिरको भान्सा वा नुहाउने ठाउँ बीचको अवरोधलाई न्यूनीकरण गर्नुहोस् ।

भर्‍याङ, समाते बार दुरूस्त छन् कि छैनन् लेखाजोखा गर्नुहोस् र आवश्यक छ भने मर्मत गर्नुहोस् ।



**६: खतराका सङ्केत** **ख२.३.६**

हटाउन वा मर्मत गर्न नसकिने खतरालाई स्पष्टरूपमा सङ्केत गरिनुपर्छ र फरक देखिने रङ्गले रङ्गाइ दिनुपर्छ । दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिका लागि सजिलै पहिचान गर्न मिल्नेगरी सार्वजनिक भवनमा र्‍याम्प तथा भर्‍याङ्गको सुरूमा र अन्त्यमा ६० सेन्टिमिटरको पट्टी राख्नुहोस् ।




**७: प्रकाशको व्यवस्था** **ख२.३.७**

सुरक्षा र पहुँचमा सुधार गर्न प्रकाशको व्यवस्था गर्नुहोस् । खास गरेर खतरा भएका स्थान (जस्तै भर्‍याङ, सतह परिवर्तन भएको स्थान)मा बत्तीका स्वीचहरूमा पहुँच पुर्याउनुहोस् ।

**८ : छेकाबार** **ख२.३.८**

सेल्टरभित्र छेकाबार लगाउन पर्याप्त सामग्री भण्डारण गर्नुहोस् (प्लाइउड वा पर्दा/छेकबार बनाउने सुकुल) । लुगा फेर्न वा सरसफाइ गर्न अरू ठाउँमा जान नसक्ने अपाङ्गता भएका व्यक्तिहरूको निजी वा गोपनीयतामा सुनिश्चित गर्न यस्ता सामग्रीको प्रयोग गर्नुहोस् ।

**९: सरसफाइका सुविधा** **ख२.३.९**

सरसफाइसम्बन्धी सुविधा जमिनको तहमा सबै प्रकारका अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँचमा छ भन्ने सुनिश्चित गर्नुहोस् । सार्वजनिक भवनहरूमा विभिन्न स्थानहरूलाई सङ्केत गर्ने चिन्हहरू राख्नुहोस् ।

घुम्ने स्थान पर्याप्त होस् भन्नका लागि शौचालयको ढोका बाहिरपट्टी खुल्ने हुनुपर्छ । थप सल्लाहको लागि सरसफाइसम्बन्धी मार्गनिर्देशन (ख१.१.६) हेर्नुहोस् ।

कहिलेकाहीँ स्थानहरूमा समान्य पुनःसंयोजन वा पुनःसंगठन गर्नुभयो भने र माथिल्लो तलामा गर्दै गरेको काम तल्लो तलामा सार्नुभयो भने पनि पहुँचको अवस्था सिर्जना गर्न सक्नुहुनेछ ।

एकैपटक सबै अनुकूलता कार्यान्वयन गर्न सक्षम हुनुहुन्न भने सुरक्षालाई पहिलो प्राथमिकतामा राख्नुहोस् र दोस्रो प्राथमिकतामा सेवा तथा सुविधालाई राख्नुहोस् । प्रयोगकर्तासँग सल्लाह गरेर निरन्तर सुधार गर्नुहोस् ।

**घटना अध्ययन ख२.३**

सी.वी.आर.ए. (कम्युनिटी वेस्ड रिह्याविलिटेसन एशोसिएसन)ले उत्तरी लेवननमा प्यालेस्टाइनी शरणार्थीहरूसँग अपाङ्गता र पुनःर्स्थापनाको क्षेत्रमा काम गरिरहेको छ । नारू अल बेयर्ड शिविर सन् २००७ मा ध्वस्त हुँदा सीवीआरएले विस्थापित हुनपुगेका अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्न एमडीपीएल (मुभमेन्ट फर पिस) सँग साझेदारी गरी काम गर्‍यो ।

शिविरको बाहिर अस्थायी सेल्टर इकाइ उपलब्ध थियो । सेल्टर भएको स्थानको भूस्थितिको कारणले गर्दा प्रवेशमार्गसम्म पुग्न भर्‍याङहरू राखिएका थिए जसले अपाङ्गता भएका व्यक्तिहरूलाई अवरोध सिर्जना गरिरहेको थियो । यसलाई सम्बोधन गर्न सीवीआरए र एमपीडीएलले नाहर अल वेयर्डका १११ सेल्टरहरूमा तथा सन् २००८ र २००९ मा नजिकको वेददावी शिविरमा अनुकूलता सिर्जना गरे ।

सेल्टर इकाइहरू साना थिए र पूर्णरूपमा पहुँच उपलब्ध गराउन कठिन थियो । यसको सट्टामा सीवीआरए र एमपीडीएलले भौतिक अवरोध हटाउन वा न्यूनीकरण गर्ने पाँचवटा प्राथमिकता तय गर्‍यो; प्रवेशद्वारसम्म पुग्न र्‍याम्प, चौडा ढोका, ढोकाका अनुकूल ह्याण्डलहरू, कुनै थ्रेसहोल्ड नभएको र नुहाउने घरमा समाउने बार । सेल्टर राखिएको क्षेत्रमा विभिन्न स्थानहरूलाई जोड्न एउटा लामो बाह्य र्‍याम्प निर्माण गरियो ।

व्यावहारिक समाधान खोज्न एकजना इन्जिनियर, अकुपेशनल थेरापिष्ट र फिजियोथेरापिष्टले सँगै काम गरे । विभिन्न घरहरूमध्ये एउटामा प्रवेशमार्ग निकै साँघुरो थियो जसमा र्‍याम्प राख्न सहज थिएन । कार्यदलले घरको अर्कोपट्टीबाट नयाँ प्रवेश मार्ग निर्माण गरे जहाँ एउटा र्‍याम्प बनाउन सकिन्थ्यो ।

# थप अध्ययनको लागि

Handicap International Nepal (2009), *Guidelines for Creating Barrierfree Emergency Shelters*. http://humanitarianlibrary.org/sites/default/files/2014/01/ Emergencies_Creating_Barrier_Free_Emergency_Shelters.pdf

IFRC (2011), *Transitional shelters: Eight designs*. http://www.ifrc.org/PageFiles/95186/900300-Transitional%20 Shel-ters-Eight%20designs-EN-LR.pdf

IFRC (2013), *Post-disaster shelter: Ten designs*. http://www.sheltercasestudies.org/files/tshelter- 8de-signs/10designs2013/2013-10-28-Post-disaster-shelter-tendesigns- IFRC-lores.pdf

Sacca, D. (2011), *Haïti: Abri transitionnel, Handicap International*. http://sheltercentre.org/sites/default/files/cdc_t-shelter_hi__haiti_v1.pdf

US Department of Justice (2007), *Checklist for emergency shelters*. http://www.ada.gov/pcatoolkit/ chap7shelterchk.htm

AusAid (2009), *Accessibility Design Guide: Universal design principles for Australia's aid program.* http://www.mindbank.info/item/2696

# पालसँग सम्बन्धित

IFRC and UNHCR (2011), *Family tent, 16m2*. http://www.ifrc.org/PageFiles/95186/208600-Shelter%20 instruction% 20flyer-EN-HR.pdf'

OCHA (2004), *A guide to the use and logistics of family tents in humanitarian relief*. http://www.sheltercentre.org/node/3107

## रूजु सूची ख२ सेल्टरको लागि मापदण्ड

- ⇒ सेल्टर भएको स्थान चौडा, पहुँचयुक्त र फोहरमैला तथा भग्नावशेष हटाइएका र निकाससहितको छ।
- ⇒ सेल्टर बनाउँदा जमिनको भूस्थितिमा ध्यान दिइएको छ र जमिनको सतह तथा सेल्टरको तल्लो सतहको बीचको फरक न्यूनीकरण गरिएको छ।
- ⇒ बढीमा १:१० अनुपातमा भिरालोपन भएको र्‍याम्प उपलब्ध गराइएको छ। ह्वीलचियरको लागि नचिप्लने खालको सतह बनाइएको छ।
- ⇒ ढोकाको खुल्ला भाग कम्तीमा ९० सेन्टिमिटर छ र जमिनमा कुनै अवरोध छैन।
- ⇒ दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिहरूका लागि पहिचान गर्न सहज होस् भनी प्रवेशद्वारमा फरक देखिने रङ्ग प्रयोग गरिएको छ।
- ⇒ ढोका र झ्याल अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचयुक्त तथा खोल्न र बन्द गर्न सजिला छन्।
- ⇒ शारीरिक अपाङ्गता भएका व्यक्ति र दृष्टिसम्बन्धी समस्या भएका व्यक्तिहरूका लागि खुडकिला तथा र्‍याम्पमा समात्ने बारहरू लगाइएका छन्।
- ⇒ सुरक्षा र पहुँचमा बृद्धि गर्न प्रकाशको व्यवस्था गरिएको छ।
- ⇒ धेरैजसो समय सेल्टरभित्रै बिताउनुपर्ने अपाङ्गता भएका व्यक्तिहरूका लागि सेल्टरभित्र जाडोको बेला न्यानो हुने व्यवस्था मिलाइएको छ।
- ⇒ निजी र गोपनीयतालाई सुनिश्चित गर्न सेल्टरको भित्री भागमा पनि छेकबारको व्यवस्था गरिएको छ।
- ⇒ सेल्टरसँग जोडिएका बाहिर आराम गर्न बनाइएका छहारीमा अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँच छ।
- ⇒ सेल्टरको ५० मिटर दूरीमा पहुँच भएका शौचालयहरू उपलब्ध छन्।
- ⇒ अन्य अवरोध हटाइएका छन्। मर्मत गरिएका छन्। यहाँनिर अवरोध छ भनी स्पष्टरूपमा सङ्केत गरिएको छ।
- ⇒ सबै उमेरका अपाङ्गता भएका केटाकेटी, महिला तथा पुरूषलाई सेल्टरका सुरक्षासम्बन्धी जोखिम पहिचान गर्न सहभागी गराइएको छ र सुधार ल्याइएको छ।
- ⇒ सेल्टरलाई स्तरोन्नति गर्न, मर्मत गर्न र जाडोको बेला न्यानो बनाउने प्राविधिक सहयोगमा अपाङ्गता भएका व्यक्तिहरूको पहुँच छ।

वितरण स्थल अव्यवस्थित र अपाङ्गता भएका व्यक्तिहरूलाई अलग्याउने खालको हुनसक्छ । वितरण गर्ने स्थान र यसको व्यवस्थापन महत्वपूर्ण हुन्छ । समुदायको दृष्टिकोणको पहिचान र व्यवस्थापन पनि उत्तिकै महत्वपूर्ण हुन्छ ।

# ख३ आकस्मिक सामग्रीको वितरण

**Sphere Handbook: अखाद्य वस्तु (पृष्ठ २६८)**
"प्रभावित जनसंख्यालाई खाने तयारी गर्न, जाडोमा न्यानो बनाउन, व्यक्तिगत स्वास्थ्यसम्बन्धी आवश्यकता पूरा गर्न र सेल्टरहरू मर्मत गर्न आधारभूत सामग्री एवं आपूर्ति जरूरी छ"

तत्कालीन विपद् प्रतिकार्यअन्तर्गत सेल्टर किट र घरायसी सामग्रीलगायत आधारभूत आवश्यकता पूरा गर्न आकस्मिक सामग्रीको वितरण आवश्यक पर्छ । यस्ता सामग्री यात्रा गर्नुपर्ने दूरी, पङ्कतिमा बस्नु पर्ने वाध्यता र सूचनाको अभावको कारणले पहुँचभन्दा बाहिर हुनसक्छ । वितरण गरिएका सामग्री अपाङ्गता भएका व्यक्तिहरूका लागि उपयोग गर्न अनुपयुक्त र कठिन पनि हुनसक्छ ।
तलका अध्यायमा अपाङ्गता भएका व्यक्तिहरूलाई समेत समावेशी हुनेगरी यस्ता आकस्मिकताको अवस्थामा वितरण गरिने सामग्रीसम्बन्धी सिफारिस पाउनुहुनेछ । यसमा मुख्यरूपमा सेल्टर र अखाद्य वस्तु हुनेछ । विकल्पको रूपमा नगद वा भौचर दिने कार्यक्रममा पनि ध्यान दिन सकिन्छ । यस्ता काममा अपाङ्गता भएका व्यक्तिहरूको संलग्नताको बारेमा गरिएका सिफारिस ग३.२ र ग३.३ मा उपलब्ध छन् ।

### यस अध्यायमा समावेश गरिएका विषयवस्तु

## ख३.१ वितरण प्रणालीलाई पहुँचयुक्त बनाउने

पहुँचसहितको वितरणले कुनै स्थानको छनौटभन्दा पनि आपूर्ति गर्नुपर्ने सामग्रीलगायत (हेर्नुहोस् तालिका २ पहुँचको अवधारणा) अन्य धेरै कुरालाई समेट्छ । सूचनाका प्रक्रिया, अभिमुखीकरण, यातायात र प्राविधिक सहयोग, श्रम सहयोगदेखि अनुमगन तथा पृष्ठपोषण संयन्त्रसम्म निर्माण गर्दा सबै उमेरका अपाङ्गता भएका महिला र पुरूषलाई लक्षित गरेर गर्नुपर्छ ।

**१: समावेशी योजना बनाउने** **ख३.१.१**

पहुँचसहितका वितरण प्रणाली र सामग्री व्यवस्थापन प्रणालीको योजनामा अपाङ्गता भएका व्यक्ति तथा उनीहरूका संस्थाहरूलाई संलग्न गराउनुहोस् ।

**२: सूचनामा पहुँच** **ख३.१.२**

सूचनाका बहुमाध्यम र ढाँचा प्रयोग गरी वितरण गतिविधिका बारेमा सूचना उपलब्ध गराउनुहोस् । पहुँचको लागि अपनाउनुपर्ने मुख्य उपायहरूमा जोड दिनुहोस् र अपाङ्गता भएका व्यक्तिहरूले यातायातको सुविधा कसरी प्राप्त गर्न सक्छन् भन्ने कुरा व्याख्या गर्नुहोस् ।

पहुँचसम्बन्धी थप सूचनाको लागि हेर्नुहोस् तालिका ३। सञ्चारका तरिका पृष्ठ १६

**३: उपयुक्त सामग्री** **ख३.१.३**

अपाङ्गता भएका व्यक्तिहरूका लागि सामग्री उपयुक्त छन् वा छैनन् भन्ने सुनिश्चित गर्न अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग छलफल गर्नुहोस् ।

**४: यातायात/ढुवानी** **ख३.१.४**

सेल्टर र घरायसी सामग्री गह्रौं र ठूला हुन सक्छन् । यस्ता सामग्रीलाई अपाङ्गता भएका व्यक्ति बसेकै स्थानसम्म पुर्‍याउने व्यवस्था मिलाउनु आवश्यक छ ।

**५: कर्मचारी र स्वयंसेवक** **ख३.१.५**

सामग्री वितरण गतिविधि सञ्चालन भइरहेका बेला अपाङ्गता भएका व्यक्तिहरूका लागि सञ्चार, अभिमुखीकरण र यातायातमा कसले सहयोग गर्ने भन्ने कुरा सुनिश्चित गर्नुहोस् ।

**६: सम्बन्धित स्थानसम्म पहुँच ख३.१.६**

वितरणको लागि पहुँच स्थान पहिचान गर्नुहोस् । किनकी दृष्टिसम्बन्धी अपाङ्गता भएका व्यक्ति र हिँडडुलमा कठिनाइ हुने व्यक्तिहरूका लागि यताउता हिँडन सहज होस् ।

वितरण स्थानका रूपमा अपाङ्गता भएका व्यक्तिका संस्थाका कार्यालयहरू, पुनर्स्थापना केन्द्रहरू, संस्था र विद्यालयहरू उपयुक्त र पहुँचमा हुन सक्छन् ।




**७: प्राथमिकता पङ्कति ख३.१.७**

अपाङ्गता भएका व्यक्तिहरू (तथा अन्य जसलाई यो आवश्यक छ)का लागि स्पष्ट सङ्केत गरिएको, आरामको लागि छहारी र विशेष सहयोगसहित प्राथमिकता पङ्कति तयार गर्नुहोस् ।

सामग्री लिन पुनः अलग्गै लाइनमा बस्दा अपाङ्गता भएका व्यक्तिहरूले पाउने हेरचाहमा कमी नआओस् भन्ने उद्देश्यले अपाङ्गता भएका व्यक्तिहरूको हेरचाह गर्नेहरूलाई पनि प्राथमिकता दिनुहोस् । यसको मुख्य उद्देश्य अपाङ्गता भएका व्यक्तिहरूलाई दिनुपर्ने सेवामा बृद्धि होस् र उसले धेरै पर्खन नपरोस् भन्ने नै हो । यसमा पक्षपातपूर्ण प्राथमिकता हुन सक्ने कुरामा भने चनाखो हुनुपर्ने हुन्छ र यस जोखिमलाई हटाउन जनचेतना अभियानमा ध्यान दिनुहोस् ।

**प्राविधिक सहयोग**

प्राविधिकरूपमा एकदमै जटिल सामग्री (जस्तैः सेल्टर निर्माणका सामग्री र उपकरण)को हकमा अपाङ्गता भएका व्यक्तिहरूले तिनको प्रयोगमा प्राविधिक सहयोग पाएका छन् भन्ने सुनिश्चित गर्नुहोस् (विस्तृत सूचनाको लागि हेर्नुहोस् ख३.३)

**अनुगमन र पृष्ठपोषण**

सामग्री पाइए कि पाइनन् र प्रयोग गरियो कि गरिएन् भनेर गरिने अनुगमन तथा पृष्ठपोषणका संयन्त्रमा अपाङ्गता भएका व्यक्तिहरूलाई संलग्न गराउनुहोस् । सम्भावित मर्मत र सामग्री पुनर्स्थापन गर्ने योजना बनाउनुहोस् ।

**घटना अध्ययन  (ख३.१)**

आकस्मिक अवस्था र पुनःप्राप्तीका (recovery)  काममा अपाङ्गता भएका व्यक्तिहरूलाई पहिचान गर्न केन्याको रेडक्रस सोसाइटीले सीवीएमसँग साझेदारी गर्‍यो । वितरण प्रणालीलाई पहुँचमा पुर्याउन प्राथिमकता दिइयो ।

अपाङ्गता भएका बालबालिकालाई खाद्य वितरण कार्यक्रममा कसरी समावेश गर्ने भन्ने बारेमा सीवीएमले रेडक्रस स्वयंसेवक र विद्यालयका प्रधानाध्यापकहरूलाई तालिम प्रदान गर्‍यो । स्थानीय अपाङ्गता भएका व्यक्तिका संस्थाहरूले पहिचान र वितरणमा सहयोग गरे ।

स्थानीय केआरसीएसको कार्यालयले अवरोध हटाएर अनुकूलता प्रदान गर्ने काम गर्‍यो । अपाङ्गता भएका व्यक्तिहरूले पनि समन्वयात्मक क्रियाकलापमा भाग लिन सकुन् भनेर यस्ते गरियो । सामग्री वितरण गरिने स्थान वा विद्यालयहरूमा जान सकून भनी धेरै मानिसलाई सहायक सामग्री उपलब्ध गराइयो । वितरण स्थलसम्म जान नसक्ने र सामग्री ल्याइदिने अरू कोही नभएका व्यक्तिहरूका लागि उनीहरू बसेकै स्थानसम्म आपूर्ति को व्यवस्था गरियो ।

## ख३.२ व्यक्तिगत वस्तु र सामान्य घरायसी सामग्री

**Sphere Handbook: NFI standard 1 (p.271)**
"सामान्य र थप घरायसी सामग्री विपतबाट प्रभावित व्यक्तिहरूले राम्ररी जानेबुझेको थप मार्गदर्शनविना नै सहजै उपयोग गर्न सक्ने हुनुपर्छ "

अपाङ्गता भएका व्यक्तिहरूका आवश्यकतालाई समावेश गरिएको एकीकृत अवधारणाअनुसार काम गर्ने सरकार र अरू सरोकारवालासँग नजिकको समन्वय गरिनुपर्छ ।

**१: अनुकूल घरायसी सामग्री** **ख३.२.१**

हिँडडुलमा कठिनाइ हुने तथा चिसोले बढी प्रभाव पार्ने अपाङ्गता भएका व्यक्तिहरूका लागि थप ब्ल्याङ्केट र लत्ताकपडाको व्यवस्था गर्नुहोस् । यस्ता वस्तु गर्मी हावापानीको अवस्थामा पनि आवश्यक पर्छ (१) । साधारण भाँडाकुँडा समात्ने वा ब्रासलेटको प्रयोगले घरायसी सामग्रीको प्रयोगमा सहजीकरण गर्न सकिन्छ जस्तैः कप, चम्चा, कलम, दाँत माझ्ने ब्रस आदि । यसको लागि विशिष्ट सेवा दिने संस्थाहरू वा अकुपेसनल थेरापिष्टसँग परामर्श गर्नुहोस् ।



(१) तातो हावापानीको लागि medium thermal type को र जाडो हावापानीको लागि high thermal type का आइएफआरसीको सामग्री सूची ।

**२: बिछ्याउना र ओछ्याउने** **ख३.२.२**

अपाङ्गता भएका व्यक्तिहरूलाई आवश्यक परेमा दबाबबाट मुक्त राख्नसक्ने खाले ओछ्याउने म्याट्रेस र बेडफ्रेम उपलब्ध गराउनुहोस् (२)




**३: शौचालय मेच/सिट** **ख३.२.३**

शारीरिक अपाङ्गता भएका व्यक्तिहरूका लागि एक ठाउँबाट अर्को ठाउँमा सजिलै लैजान सकिने शौचालय सिट बढी पहुँचमा हुन्छ ।




**४: स्वास्थ्यसम्बन्धी सामग्री** **ख३.२.४**

अपाङ्गता भएका व्यक्तिहरूका लागि स्वास्थ्यसम्बन्धी थप सामग्री भण्डारण गर्नुहोस् । आवश्यकताको लेखाजोखा र परामर्श गर्दा विभिन्न उमेर समूहका महिला तथा पुरूष अपाङ्गता भएका व्यक्तिहरूको आफ्नो संस्कृति एवं संस्कारजन्य प्राथमिकताको बारेमा सचेत हुनुहोस् । अपाङ्गता भएका व्यक्तिहरूलाई व्यक्तिगत आवश्यकताअनुसार साबुन, पानी, स्यानिटरी प्याड, महिनावारी हुँदा लगाउने लुगा, इनकन्टिनेन्स प्याड र अन्य स्वास्थ्यसम्बन्धी सामग्रीमा पहुँच छ भन्ने सुनिश्चित गर्नुहोस् ।

(२) यसमा स्पाइनल कर्ड इन्ज्युरी भएका, हड्डीसम्बन्धी र बाथको समस्या भएका मानिस तथा धेरै समय आफ्नो बिछ्याउनामा बिताउनेहरू पनि पर्न सक्छन् ।

सांस्कृतिक विविधताले सरसामानको उपयुक्तता र NFT kits को संरचनामा असर पार्छ । यसले पनि महिला र पुरूष दुवै अपाङ्गता भएका व्यक्तिको संलग्नतामा कसले कसरी सामग्री उपयोग गरेका छन् भन्ने थाहा पाउन परामर्शको आवश्यकतालाई दर्शाउँछ ।

**५: सञ्चालन क्षमता**

ताप, प्रकाश र खाना बनाउनको लागि अपाङ्गता भएका व्यक्तिहरूलाई वितरण गरिएका सामग्री सञ्चालन गर्न सुरक्षित तथा सहज हुनुपर्छ । टाउकोमा बाँधेर प्रयोग गर्ने बत्ती, अन्य सजिलै बोकेर एक स्थानबाट अर्को स्थानमा लैजान सकिने बत्ती र हुन सक्छ सौर्य शक्तिबाट चल्ने जस्ता चल्ने बत्तीहरूमा ध्यान दिनुहोस् ।

अपाङ्गता भएका व्यक्तिहरूका घरायसी आवश्यकता सम्बोधन भएका छन् भन्ने सुनिश्चित गर्न सरसफाइ, स्वास्थ र अन्य क्षेत्रका सरोकारवालासँग परामर्श गर्नुहोस् । जेरी क्यान र लामखुट्टे रोक्ने झुल सेल्टरभन्दा बाहेकका सामग्रीका उदाहरण हुन्, जसमा अनुकूलताको आवश्यकता पर्न सक्छ ।

**सहायक सामग्रीको लागि प्रेषण**

ओहोरदोहोरको लागि चाहिने सहायक सामग्रीहरू सेल्टर र बसोबाससँग सम्बन्धित छैनन्, तर जसले बैशाखी, ह्वीलचियर वा सेतोछडी जस्ता सामग्री गुमाएका छन् भने त्यस्ता सामग्रीका लागि सम्बन्धित ठाउँमा प्रेषण गरिन्छ ।

ह्याण्डीक्याप इन्टरनेशनल र जोननिटर इन्टरनेशनल एसिस्टेन्सको आपसी सहकार्यमा आकस्मिकताको अवस्थालाई ध्यान दिएर कम लागतको ह्वीलचियर डिजाइन गरियो । यस्तो ह्वीलचियर पहिलोपटक फिलिपिन्समा हाइयान नाम गरेको सामुद्रिक आँधी आएको बेला प्रयोग गरिएको थियो र घाइते तथा सहायक सामग्री गुमाएका हिँडडुलमा समस्या हुने अपाङ्गता भएका व्यक्तिहरूलाई वितरण गरिएको थियो ।

मूलधारका संस्थाहरूमा नहुने यो एउटा विशिष्ट प्रकृतिको पेशागत क्रियाकालाप हो । ह्वीलचियर चिकित्सासम्बन्धी एउटा उपकरण हो र यसको वितरणको लागि योग्य विज्ञता भएको व्यक्ति हुनु जरूरी छ ।

## ख३.३ आइ.एफ.आर.सी.को मापदण्डका सेल्टर किट र सेल्टर सहयोग सामग्रीहरू

Sphere Handbook: NFI standard 1 (p.271)
" सेल्टर र सेल्टर सहयोगी सामग्री (जस्तैः निर्माण, उपकरण र मर्मत)को व्यवस्थालाई सहयोग गर्न प्राविधिक मार्गदर्शन र प्रशिक्षण उपयुक्त किसिमले प्रदान गरिनुपर्छ ।"

सेल्टर किट र सेल्टर सहयोग सामग्रीको लक्ष्य विपद् प्रभावित मानिसहरूलाई सेल्टरको स्तरोन्नति, मर्मत सम्भार, निर्माणमा सहयोग गर्नका लागि हो । यद्दपी सेल्टर किट र सेल्टरसँग सम्बन्धित सरसामानहरू आवश्यकताअनुसार छरितो तरिकाले सहयोग गर्नको लागि भए पनि जब निजी जीवन र पहुँचको कुरा आउँछ केही चुनौति अवश्य रहन्छन् ।
अपाङ्गता भएका व्यक्तिहरूलाई प्राथमिकतामा राखेर सँधै परामर्श लिनुहोस् र सहयोगका लागि महत्व दिनुहोस् । अपाङ्गता भएका व्यक्तिहरूलाई सेल्टर किट र आकस्मिक सेल्टर सामग्रीको वितरण डिजाइन गर्दा ध्यान दिनुपर्ने केही कुराहरू तल सिफारिस गरिएका छन् ।

**१: यातायात /ढुवानी** **ख३.३.१**

निर्माण सामग्री ढुवानी गर्नको लागि अपाङ्गता भएका व्यक्तिहरूको हकमा सहयोग उपलब्ध गराउनुहोस् । उदाहरणको लागि थप नगद सहयोग (हेर्नुहोस् ग३), घरमै पुर्‍याइदिने व्यवस्था वा सामुदायिक सहयोग समूह ।

**२: तालिम** **ख३.३.२**

वितरण गरिएका उपकरण वा सामग्री चलाउन नजान्नेहरूका लागि थप तालिम वा प्राविधिक सहयोग उपलब्ध गराउनुहोस् । प्राविधिक सहयोग उपलब्ध गराउँदा तालिमका क्रममा नमूनाका रूपमा एउटा सेल्टर नै निर्माण गरेर देखाउने कामलाई पनि समावेश गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिहरूलाई पनि समावेश गर्नुहोस् र पहुँचसँग सम्बन्धित विषयलाई जोड दिनुहोस् ।

**३: प्राविधिक मार्गदर्शन** **ख३.३.३**

विद्यमान प्राविधिक दस्तावेजको पुनरावलोकन गर्नुहोस् । सुरक्षित सेल्टर निर्माणसँग सम्बन्धित मार्गदर्शन तथा सूचना पहुँचसहितका ढाँचामा उपलब्ध गराइएका छन् वा गरिन्छन् भन्ने सुनिश्चित गर्नुहोस् ।



सुरक्षित र पर्याप्त सेल्टर बनाउँदा उपलब्ध सामग्रीलाई सुरक्षित तरिकाले कसरी प्रयोग गर्न सकिन्छ भन्ने बारेमा उदाहरणसहितका सामान्य चित्र बनाएर देखाउन सकिन्छ ।

**४: थप सहयोग** **ख३.३.४**

पहुँचसम्बन्धी व्यक्तिगत आवश्यकताका आधारमा थप सामग्री उपलब्ध गराउनुहोस् । जस्तैः प्रयोग गर्न सजिलो हुने ढोकाको ह्याण्डल, झ्यालढोका खोल्न लगाउन प्रयोग हुने डोरी, सेल्टरको भित्र र बाहिर आवतजावतमा सहयोग गर्न समात्ने बारको व्यवस्था वा साना आकारका एक ठाउँबाट अर्को ठाउँमा लैजान मिल्ने र्‍याम्पहरू (हेर्नुहोस् ख२.२)।

**५: सामग्रीमा पहुँच** **ख३.३.५**

आइएफआरसीको सेल्टर किटमा पाल उभ्याउने खम्बाहरू पर्दैनन् । स्थानीय काठका वा बाँकी उपलब्धताको लेखाजोखा गर्नुहोस् र अपाङ्गता भएका व्यक्तिहरूले पनि ती सामग्री प्राप्त गर्छन् भन्ने सुनिश्चित गर्नुहोस् ।

**६: आन्तरिक छेकावार** **ख३.३.६**

धेरै समय घरभित्रै बसिरहनुपर्ने अपाङ्गता भएका व्यक्तिहरूको लागि उनीहरूको गोपनीयताको संरक्षण गर्न छेकाबार बनाउने म्याट वा थप त्रिपाल उपलब्ध गराउनुहोस् ।




सेल्टर निकै सानो छ भने अपाङ्गता भएका व्यक्तिहरूको निजी र गोपनीयताको आवश्यकतालाई सम्बोधन गर्न सेल्टरलाई विस्तार गर्ने सम्भावनाका बारेमा ध्यान दिनुहोस् ।

अपाङ्गता भएका व्यक्तिहरूलाई छरछिमेकीले स्वत: सहयोग गरिहाल्छन् भन्ने अनुमान नगर्नुहोस् । स्वयंसेवक उपलब्ध गराउनुहोस् वा सामुदायिक कार्यकर्ताहरूलाई अपाङ्गता भएका व्यक्तिलाई सहयोग गर्नको लागि नगद सहयोग उपलब्ध गराउनुहोस् वा व्यक्तिगत सेल्टरको स्तरोन्नति गर्नुहोस् ।

**घटना अध्ययन ख३.३**

गेर (Ger ) मंगोलियामा प्रयोग गरिएको एउटा परम्परागत र एकठाउँबाट अर्को ठाउँमा लैजान सकिने (Portable ) सेल्टर हो । गेर निर्माण गर्दा पर्खालको भाग आँखिझ्याल जस्तो बनाएर, छानामा बिमहरू प्रयोग गरेर, फ्रेमवाला ढोका र गोलो आकारमा निर्माण गरिन्छ । यसको संरचनालाई एक प्रकारको जाडो वा गर्मिबाट सुरक्षा दिने कपडा (felt ) ले ढाकिन्छ ।

गेरमा मुख्य गरेर चार वा पाँचवटा आँखिझ्याल जस्ता पर्खालका भाग हुन्छन् । यसको ठूलो नमूना ढुवानी गर्न र निर्माण गर्न निकै कठिन हुन्छ । जाडोको बेला यसलाई न्यानो राख्न निकै उर्जा आवश्यक पर्छ । सानो नमूना भने एकठाउँबाट अर्को ठाउँमा लैजान अनि निर्माण गर्न पनि सहज हुन्छ र जाडोमा न्यानो बनाइराख्न पनि सजिलो हुन्छ ।

अपाङ्गता भएका व्यक्तिहरूलाई सेल्टर उपलब्ध गराउँदा मंगोलियन रेडक्रस सोसाइटीले यसमा ध्यान दिन्छ र प्रायः चार पर्खाल भएका साना आकारका गेर सिफारिस गर्छ । यस्ता सेल्टरहरू एक्लै बस्ने ज्येष्ठ नागरिकको लागि पनि प्राथमिकताका साथ उपयोग गर्ने गरिन्छ ।

## थप अध्ययनको लागि

IASC Emergency Shelter Cluster (2009), *Selecting NFIs for Shelter*. http://www.ifrc.org/PageFiles/95759/D.03.a.04.%20NFIs%20for%20 Shelter_IASC.pdf

ICRC and IFRC (2009), *Emergency Items Catalogue.* Third Edition. http://procurement.ifrc.org/catalogue/index.aspx

IFRC (2009), *The IFRC Shelter Kit.* http://www.ifrc.org/PageFiles/95526/publications/D.03.a.07.%20 IFRC%20shelter-kit-guidelines-EN-LR.pdf

IFRC (2011), *Shelter Safety Handbook: Some important information  on how to build safer.* http://www.ifrc.org/PageFiles/95526/ publications/305400-Shelter%20safety%20handbook-EN-LR.pdf

IFRC and Oxfam International (2007), *Plastic Sheeting: a guide to the  specification and use of plastic sheeting in humanitarian relief*. http://www.ifrc.org/PageFiles/95534/D.03.a.01.Plastic%20 Sheeting_Englis.pdf

NRC (2008), *Camp Management Toolkit*. Chapter 13: "Food  distribution and non-food items". http://www.nrc.no/camp

Sphere Project (2011), *Sphere Handbook: Humanitarian Charter and  Minimum Standards in Humanitarian Response*. Chapter on “Non-food  items: clothing, bedding and household items” p.268-277. http://www.sphereproject.org

UNHCR (2007), *Handbook for Emergencies, Third edition.* Chapter 13:  Commodities distribution. http://www.unhcr.org/472af2972.html

## रूजु सूची ख३ आकस्मिक सामग्रीको वितरण

⇒ आकस्मिक सेल्टर र घरायसी सामग्रीसम्बन्धी आवश्यकता र प्राथमिकतामा अपाङ्गता भएका व्यक्तिहरूलाई परामर्श गरिएको छ ।

⇒ पहुँचसहितको वितरण प्रणालीको योजना बनाउन र सामग्रीको भण्डारण व्यवस्थापनमा अपाङ्गता भएका व्यक्तिहरूलाई संलग्न गरिएको छ ।

⇒ सामग्री वितरण गर्न पहुँचसहितका क्षेत्र पहिचान गरिएको छ । यस्ता सामग्रीसम्म पहुँच प्राप्त गर्न अपाङ्गता भएका व्यक्तिहरूले सूचनालगायत यताउता हिँडडुल गर्न सहयोग प्राप्त गरेका छन् ।

⇒ वितरण क्षेत्रमा प्राथमिकता पङ्कति, आराम गर्ने छहारी र पहुँचयुक्त शौचालयको व्यवस्था गरिएको छ । तालिमप्राप्त कर्मचारीहरूले पङ्कतिको अनुगमन गर्छन् र सहयोग उपलब्ध गराउँछन् ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूका लागि सामग्री उपयुक्त छन् भनी सुनिश्चित गर्न किट निर्माण गर्दा अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श गरिएको छ ।

⇒ धेरैभन्दा धेरै व्यक्तिलाई स्वास्थ्य र शौचालयको सुविधामा पहुँच पुर्‍याउन यताउता लैजान सकिने (पोर्टेबल) शौचालय मेच उपलब्ध छन् ।

⇒ सबै उमेरका अपाङ्गता भएका केटाकेटी, महिला र पुरूषका घरायसी आवश्यकता पूरा गर्न अन्य क्षेत्रहरूसँग परामर्श गरिएको छ । प्रेषण गर्ने पद्धति स्थापित गरिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूका लागि भारी र ठूला सेल्टरसँग सम्बन्धित सामग्री उनीहरू बसैकै स्थानमा आपूर्ति गरिदिने व्यवस्था छ ।

⇒ सुरक्षित तथा पहुँच सेल्टर निर्माणको लागि अपाङ्गता भएका व्यक्तिहरूले प्राविधिक सहयोग, तालिम र सूचना पाएका छन् ।

⇒ सेल्टर उपकरणहरू कसरी प्रयोग गर्ने भन्ने बारेमा सूचना बहु पहुँचका ढाँचामा उपलब्ध छन् ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूको निजी जीवन र गोपनीयता सुनिश्चित गर्न आन्तरिक छेकाबार र थप सामाग्री उपलब्ध गराइएको छ ।

⇒ अनुगमनका गतिविधि र पृष्ठपोषणका गतिविधिमा अपाङ्गता भएका व्यक्तिहरूले पहुँच पाएका छन् ।

# खण्ड : ग

**अपाङ्गता भएका महिला र पुरूषलाई योजना, डिजाइन र निर्माणमा सहभागी गराउनु भनेको विभिन्न आवश्यकता पूरा गर्न तथा निर्णयमा प्रभाव पार्न मात्र होइन । यो त समुदायका अपाङ्गता भएका व्यक्तिहरू प्रतिको दृष्टिकोणमा परिवर्तन ल्याउनका लागि पनि हो ।**

# सहभागिता र समान अवसर प्रवर्द्धन गर्ने

यस भागमा तपाईँले सेल्टर र बसोबाससँग सम्बन्धित गतिविधिको योजना तथा कार्यान्वयनमा अपाङ्गता भएका व्यक्तिहरूलाई कसरी संलग्न गराउने भन्ने बारेमा विस्तृत सिफारिस प्राप्त गर्नुहुनेछ ।
सुरूका भागमा जस्तै शारीरिक अपाङ्गता र इन्द्रीयसम्बन्धी अपाङ्गतालाई मुख्य ध्यान दिइनेछ, तर खुल्ला सहभागितामूलक र समावेशी प्रक्रियाबाट समुदायका सबै सदस्यहरू लाभान्वित हुनेछन् ।
सुरूदेखि कार्यान्वयन गरिन्छ भने यी सिफारिसले अपाङ्गता भएका व्यक्तिहरूलाई सेल्टर र बसोबाससम्बन्धी गतिविधिमा सहभागी हुन सक्षम बनाइ मुख्य निर्णयहरूमा प्रभाव पार्छन् । अगाडिका प्रक्रियाहरूमा तपाईँले परियोजना कार्यान्वयन र अनुगमनका लागि मार्गदर्शन प्राप्त गर्नुहुनेछ ।

## यस खण्डमा समावेश गरिएका विषयवस्तु

समावेशी र संलग्नताको लागि प्रभावकारी उपाय अवम्बन नगरिकन अपाङ्गता भएका व्यक्तिहरूलाई बैठकहरूमा निमन्त्रणा गरिए पनि सहभागी हुँदैन ।



# ग१ लाभान्वित समूहका लागि समावेशी सञ्चार

**आइ.एफ.आर.सी./आइ.सी.आर.सी. को आचारसंहिता**
"प्रभावकारी राहत र दिगो पुनर्स्थापना त्यहाँ मात्र हासिल गर्न सकिन्छ जहाँ लक्षित लाभान्वितहरू सहयोग कार्यक्रमको कार्यान्वयन, व्यवस्थापन र डिजाइनमा संलग्न हुन्छन् । हामी हाम्रा राहत र पुनर्स्थापना कार्यक्रमहरूमा समुदायको पूर्ण सहभागिताको लागि प्रयत्न रहनेछौँ ।"

सञ्चार दुईतर्फी हुनुपर्छ र यसले सबै प्रभावित जनसंख्यालाई आफ्नो पुरानो अवस्थामा फर्कन (Recovery ) का लागि सहभागी हुन दिनुपर्छ । सबै उमेर समूहका विभिन्न प्रकारका अपाङ्गता भएका केटाकेटी, महिला र पुरूषका आवाज सुनिनुपर्छ । आकस्मिक सेल्टर र बसोबास व्यवस्थालाई सम्बोधन गर्ने कार्यमा प्रभाव पार्नुपर्छ ।

यसमा सञ्चार गर्ने कर्मचारी, अपाङ्गता सम्पर्क बिन्दु तथा सेल्टर र बसोबासको व्यवस्थापनसँग जिम्मेवार कार्यक्रम व्यवस्थापकका बीचमा नजिकको सम्पर्क जरूरी हुन्छ । तलका अध्यायहरूमा तपाईँले यो कुरा कसरी हासिल गर्ने भन्ने बारेमा व्यावहारिक सिफारिस प्राप्त गर्नुहुनेछ ।

## यस अध्यायमा संलग्न विषयवस्तु



लक्षित समूह सञ्चार (Beneficiary Communication ) आइ.एफ.आर.सी.ले राहत गतिविधिको बारेमा सूचना प्रवाह गर्न र समुदायबाट रेडक्रस सोसाइटी तथा रेडक्रिसेन्ट सोसाइटीको लागि गरिने सुझाव सङ्कलन दुवैलाई व्याख्या गर्न प्रयोगमा ल्याएको शब्दावली हो ।

## ग१.१ सूचनालाई पहुँचमा पुर्‍याउने

पहुँचसहितका माध्यम वा ढाँचामा समयमै उपलब्ध गराइएका सूचनाले जीवन बचाउँछ, तर विनाभेदभाव सूचना उपलब्ध गराउनु पनि अर्को आवश्यकता हो । बहुमाध्यम तथा तरिकाले र नयाँ तथा पुरानो प्रविधिको मिश्रणले अपाङ्गता भएका व्यक्तिहरूलाई सूचनामा पहुँच पुर्‍याउन मद्दत गर्छ ।

**१: समावेशी योजना निर्माण** **ग१.१.१**

सेल्टर र बसोबास कार्यक्रमको लागि सञ्चारको योजना विकास गर्न अपाङ्गता भएका व्यक्तिका संस्थासँग सम्पर्क गर्नुहोस् । यसअन्तर्गत लक्षित अपाङ्गता भएका व्यक्तिहरूको लागि समयमै पहुँचयुक्त तरिकाले सूचना दिने कुरा पर्छ (१) । हेर्नुहोस् तालिका ३, सञ्चारका तरिका र उदाहरणको लागि घटना अध्ययन ।





अपाङ्गता भएका व्यक्तिहरूसँग उनीहरूले चाहने उपयुक्त सञ्चारमाध्यमका बारेमा परामर्श गर्नुहोस् ।

सूचनालाई अपाङ्गता भएका व्यक्तिहरूसँग परीक्षण गरी पृष्ठपोषणलाई समावेश गर्नुहोस् ।

**२: परियोजनासम्बन्धी सूचना** **ग१.१.२**

सूचनाका विभिन्न तरिका प्रयोग गरी प्रभावित मानिसलाई तपाईंको आफ्नो संस्था, परियोजना र छनौट गर्ने प्रक्रियाका बारेमा स्पष्ट तथा सजिलो भाषामा सूचना प्रदान गर्नुहोस् ।

**३: सूचना विन्दु** **ग१.१.३**

ह्वीलचियर प्रयोगकर्ताले पढ्न सक्ने र अपाङ्गता भएका व्यक्तिहरू पुग्न सक्ने स्थानमा हुनुपर्छ भनेर सूचनापाटीलाई उपयुक्त ठाउँ, उचाइ र कोणमा राखिनुपर्छ । (हेर्नुहोस् ख११८)

---

*(१)सञ्चारका विभिन्न साधनहरू प्रयोग गरेर गरिने सूचनाले विश्वका १५ प्रतिशत निरक्षर युवा जनसंख्यासमेत लाभान्वित हुन्छन् (स्रोत: UNESCO Institute for Statistics, September 2013, http://www.uis.unesco.org/literacy/Documents/ fs26-2013-literacy-en.pdf ). शिक्षामा अवरोधको मतलब अपाङ्गता भएका व्यक्तिहरू उनीहरूका साङ्ग साथीहरूको तुलनामा शैक्षिक सीप हासिल गर्न पाउँदैनन् भन्ने हो (स्रोत : Leonard Cheshire Centre for Disability and Inclusive development (2009), Illiteracy among Adults with Disabilities in the Developing World: An Unexplored Area of Concern).*

**४: अपाङ्गता डेस्क** **ग१.१.४**

विभिन्न प्रकृतिका अपाङ्गता भएका व्यक्तिहरूसँग सञ्चार गर्न तालिमप्राप्त कर्मचारी वा स्वयंसेवकले सेवा र सहयोगका बारेमा सूचना दिइने त्यस्ता पहुँच भएका स्थानमा आकस्मिकताको अवस्था पूर्व नै अपाङ्गता डेस्क स्थापना गर्नुहोस् (हेर्नुहोस् ख१.१.११)।

**५: छापा सामग्री** **ग१.१.५**

छापा सूचना सामग्रीमा ठूलो अक्षरमा सूचना छाप्नुहोस्। यसमा पृष्ठभूमि र अक्षरको स्पष्ट भिन्नता थाहा पाउने गरी विभिन्न रंगको प्रयोग गर्नुहोस्।

**६: गृह भेट** **ग१.१.६**

टाढा बसिरहेको वा घरभित्रै बसिरहनुपर्ने अवस्थाका अपाङ्गता भएका व्यक्तिहरूलाई घरमै गई भेट गर्नुहोस् वा व्यक्तिगत टेलिफोनमा सूचना उपलब्ध गराउनुहोस्।

**७: वेवसाइटमा पहुँच** **ग१.१.७**

वेवसाइटमा राखिएका सूचना पहुँचमा हुनुपर्दछ र अपाङ्गता भएका व्यक्तिहरूले उपयोग गर्ने सफ्टवेयर तथा हार्डवेयरको प्रयोग गरेर सजिलै विद्युतीय सूचनामा पहुँच प्राप्त गर्न सकिने हुनुपर्छ।

संकेतको हकमा ह्वीलचियरको संकेत सबैभन्दा धेरै प्रयोगमा रहेको र धेरैले बुझ्ने सङ्केत हो।



अपाङ्गताको सक्रिय प्रतिनिधित्वलाई देखाउने यस्तो नयाँ आइकन पनि अहिले प्रयोगमा छ।



See http://www.accessibleicon.org/

**घटना अध्ययन  ग१.१**

सन् २०१० को जनवरीमा हाइटीमा गएको भूकम्पको केही दिनपछि आईएफआरसीले आकस्मिक प्रतिकार्यको हिस्साको रूपमा महत्वपूर्ण लक्षित समूह सञ्चार प्रतिनिधि पठायो । लक्षित समूह सञ्चार गतिविधिलाई कार्ययोजनामा जोड दिइयो र हरेक कार्यक्रमलाई संचार रणनीति बनाई सहयोग गरियो । (यस अवधारणा अपाङ्गताको समावेशीकरणमा पनि परीक्षण गर्न सकिन्छ । हेर्नुहोस् क२.१.४)

सन् २०१३ को अप्रिलमा  प्रयोग गरिएका विभिन्न प्रकारका सञ्चारका तरिकाका बारेमा व्याख्या गरिएको "हाइटी लक्षित समूह सञ्चार समीक्षा" शीर्षकमा एउटा प्रतिवेदन प्रकाशित भयो ।

टेलिकम्युनिकेसन कम्पनीसँगको साझेदारीमा खास गरी स्वास्थ्यसँग सम्बन्धित सूचना र मौसमसम्बन्धी पूर्वचेतावनी पठाउन एस.एम.एस. बाट सन्देश दिने सुविधा स्थापित गरियो । त्यसमार्फत सन् २०१० देखि २०१३ सम्ममा ५० करोड वटा सन्देश पठाइएको थियो ।

टेलिफोन प्रयोगकर्तालाई आफूले चाहेको सूचना (जस्तैः विपद्को पूर्वतयारी वा यौन स्वास्थ्य) छनौट गर्न सहज होस् भनी स्वचालित आवाजबाट सन्देशसहितको टेलिफोन हटलाइन सेवा सञ्चालन गरियो । सन् २०१२ मा प्रतिमहिना १६०० कल दर्ता भए । फोन गर्ने व्यक्तिहरूबाट पनि स्वचालितरूपमा नै पृष्ठपोषण लिने व्यवस्था गरिएको भए पनि यसको कार्यान्वयन राम्ररी हुन सकेन ।

एकदमै व्यक्तिगत प्रकृतिका सूचना र पृष्ठपोषणको लागि स्थापित कल सेन्टर थियो जुन शिविरमा फर्कन र पुन:स्थापन (Relocation )  कार्यक्रमको लागि निकै महत्वपूर्ण स्रोत बन्यो ।

सन् २०१० मा दुईवटा रेडियो स्टेशनबाट एउटा साप्ताहिक रेडियो कार्यक्रम सुरू गरियो । तीमध्ये एउटा पोर्ट अफ प्रिन्समा थियो भने अर्को राष्ट्रियस्तरको थियो । रेडियो कार्यक्रममा एउटा अन्तरक्रियात्मक भाग थियो, जसमा सन् २०१२ मा ११०० टेलिफोनकर्ताले प्रश्न उत्तरमा भाग लिएका थिए ।

अरू उपलब्ध सञ्चारका तरिकाको सन्दर्भमा उपयुक्त स्थानमा सही समयमा सम्बन्धित सूचना लक्षित समूहसम्म पुर्‍याउन पोष्टर र लिफलेटको उपयोग गरियो ।

स्पिकर र माइक्रोफोनसहितको सवारी साधनमार्फत पनि विशिष्ट प्रकृतिका सूचनालाई लक्षित समुदायमा पुर्‍याउन एवं पृष्ठपोषण सङ्कलन गर्न सकिन्छ ।

विभिन्न प्रकारका सञ्चारका तरिकाको संयुक्त उपयोगबाट धेरैभन्दा धेरै मानिससम्म सूचना पुर्‍याउने सबैभन्दा प्रभावकारी उपाय हो भन्ने कुरा प्रमाणित भयो, तर हामीमध्ये धेरैजना अझै पनि आमुन्नेसामुन्नेबाट हुने सञ्चार (face-to-face communication ) लाई बढी मनपराउछौँ । यसलाई परिपूर्ति गर्न माथि उल्लेख गरिएका उदाहरण उपयोगी हुन सक्छन् ।



सञ्चारका विभिन्न प्रकारका साधनको प्रयोगबाट मात्रै पनि अपाङ्गता भएका व्यक्तिहरूले सूचना प्राप्त गर्न सक्छन् र सञ्चार प्रक्रियामा भाग लिन्छन् भन्ने होइन । दुईतर्फी सञ्चारको अर्थ पृष्ठपोषण र गुनासा दर्ता गर्नु पनि हो । यसको लागि विशेष ध्यानाकर्षण फलोअप जरूरी छ । थप सिफारिसको लागि हेर्नुहोस् ग.१.३ ।

## ग१.२ बैठक र कार्यशालामा सहभागिता

अपाङ्गता भएका व्यक्तिहरू र उनीहरूको हेरचाह गर्नेहरूका लागि बैठक र कार्यशालालाई पहुँचमा पुर्‍याउन अनुकूल र क्रियाकलापको एउटा सिलसिला आवश्यक हुन्छ । यसमा कुनै एउटाको मात्र पनि अभावले सहभागितामा अवरोध ल्याउँछ ।

यस अध्यायमा हामी यस क्रममा ध्यान पुर्‍याउनुपर्ने प्रमुख सवाल पहिचान गर्छौं र विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूलाई समावेश गराउने सिफारिस गर्छौं । अन्य अध्यायमा जस्तै यसमा पनि इन्द्रीयसम्बन्धी र शारीरिक अपाङ्गता भएका व्यक्तिहरूको सहभागितामा केन्द्रीत गरिनेछ ।

**१: समावेशी योजना** **ग१.२.१**

स्थानीय अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग सम्पर्क गर्नुहोस् । सँगै बसेर पहुँचयुक्त बैठकका बारेमा छलफल गर्नुहोस् ।

**२; स्थानमा पहुँच** **ग१.२.२**

सुरक्षित क्षेत्रमा सम्भावित स्थान पहिचान गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिहरूले नै राम्ररी जानेबुझेको र दृष्टिसम्बन्धी एवं शारीरिक अपाङ्गता भएका व्यक्तिहरू पुग्न सक्ने कुनै पहुँचको स्थान छ कि भनी अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग परामर्श गर्नुहोस् ।

आकस्मिकताको अवस्थामा स्थान सुरक्षित छ कि छैन भन्ने कुरामा पनि ध्यान दिनुहोस् । अपाङ्गता भएका व्यक्तिलाई समावेश गर्ने कुनै इभ्याकुएसन योजना छ कि छैन पत्ता लगाउनुहोस् । छैन भने अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग कसरी समावेश गर्ने भन्ने बारेमा परामर्श गर्नुहोस् ।

**३: स्थानको अनुकूलता** **ग१.२.३**

संभावित स्थानहरूमा पहिले नै भ्रमण गर्नुहोस् र सबैभन्दा उपयुक्त स्थान छनौट गर्नुहोस् । आवश्यकता छ भने अपाङ्गता भएका व्यक्तिहरू प्रवेश गर्न र यतायता हिँडडुल गर्न सक्ने अनुकूलको स्थान उपलब्ध गराउनुहोस् ।

**४: बैठकको निमन्त्रणा** **ग १.२.४**

बैठकको निमन्त्रणा बहु ढाँचा र तरिकाबाट पठाउनुहोस् । निमन्त्रणामा बैठक गर्न लागिएको स्थानको पहुँचको बारेमा उल्लेख गर्नुपर्छ ।



अपाङ्गता भएका व्यक्तिहरूलाई छलफल गर्न र तयारी गर्न बढी समय प्राप्त होस् भनी निमन्त्रणासँगै बैठक वा छलफलको पृष्ठभूमि पनि उपलब्ध गराउनुहोस् । यसले सहभागीहरूलाई बैठकमा सहजीकरण गर्न सहयोग गर्छ (हेर्नुहोस् ग१.१.३) ।

**५: विशेष अनुरोध** **ग१.२.५**

अपाङ्गता भएका व्यक्ति वा उसको हेरचाह गर्ने व्यक्तिलाई बैठकका बेला सम्बोधन गराउनुपर्ने केही विशेष आवश्यकता छन् भने बैठक आयोजकसँग विशेष अनुरोध गर्ने अवसर प्रदान गर्नुहोस् ।



पहुँचसँग प्रत्यक्ष सम्बन्ध नराख्ने, तर थप आवश्यकतालाई सम्बोधन गर्न खुल्ला हुनुहोस् । जस्तैः बाल मैत्री स्थान भयो भने अपाङ्गता भएका बालबालिकाका अभिभावकलाई सहभागी हुन सहज हुन्छ ।

**स्थानको लागि पहुँचसम्बन्धी सर्त**

⇒ अवरोधमुक्त प्रवेशद्वार र भित्र आवतजावत गर्न सकिने (आवश्यक भए र्याम्पसहित)
⇒ पहुँचसहितका शौचालय/भुइँतल्लामै सरसफाइ सुविधा
⇒ प्राकृतिक प्रकाश राम्ररी आउने र कृत्रिम प्रकाशको पनि व्यवस्था भएको
⇒ पृष्ठभूमिबाट आउने आवाज कम भएको (२)

विस्तृत प्राविधिक मापदण्डको लागि भवनमा हुनुपर्ने अनुकूलतासम्बन्धी सिफारिसको लागि हेर्नुहोस् ख३.३ "विद्यमान भवनहरूमा अनुकूलता"

**६: यातायात** **ग१.२.६**

आवश्यकता पर्ने अपाङ्गता भएका व्यक्तिलाई बैठकस्थलसम्म आउन र जान पहुँचसहितको यातायातको व्यवस्था गर्नुहोस् । सामुदायिक कार्यकर्ताहरूले यसमा सहयोग गर्न सक्नुहुन्छ ।

---

*(१)दृष्टिसम्बन्धी अपाङ्गता भएका व्यक्तिलाई हिँडडुलका लागि र सुनाइसम्बन्धी अपाङ्गता भएका व्यक्तिलाई सञ्चारका लागि पर्याप्त प्रकाशको आवश्यकता पर्छ ।*

*(२)छलफलमा एउटाले अर्कोलाई अवरोध नपुर्याउन समूह छलफलको लागि अलग्गै कक्ष उपलब्ध गराउनुहोस् वा एउटा र अर्को समूहबीचको दूरी पर्याप्त राख्नुहोस् ।*

**७: तालिम** **ग१.२.७**

बैठक सञ्चालक, कर्मचारी र स्वयंसेवकलाई अपाङ्गताको सवालमा तालिम प्रदान गर्नुहोस् ।

**८: स्वयंसेवक** **ग१.२.८**

अपाङ्गता भएका व्यक्तिलाई सूचना, दिशा निर्देश तथा सहयोग दिन बैठक स्थलको प्रवेशद्वार तथा दर्ता डेस्कमा तालिमप्राप्त कर्मचारी र स्वयंसेवक राख्नुहोस् ।

**९: व्याख्या** **ग१.२.९**

सुनाइसम्बन्धी अपाङ्गता भएका व्यक्तिलाई सञ्चारमा सहयोग गर्न स्थानीय साङ्केतिक भाषा दोभाषे वा नोट टेकर उपलब्ध गराउनुहोस् । यस्तो आवश्यकता अग्रिमरूपमा नै पहिचान गरेर व्यवस्थापन गर्नुपर्छ (हेर्नुहोस् ग१.२.५) र समावेशी सहयोग कार्यक्रमको योजनामा बजेटको व्यवस्था गरिएको हुनुपर्छ ।

सहभागिताको बृद्धिसँगै अपेक्षामा पनि बृद्धि हुन्छ । समुदायको बैठक वा सहभागितामूलक प्रक्रियामा निमन्त्रणा गर्नु पूर्व सेल्टर र बसोबास कार्यक्रमको लचकताको बारेमा पनि जानकारी राख्नुहोस् । तपाईँको डिजाइन तथा अवधारणाअनुसार कतिलाई समेट्न सकिन्छ राम्ररी बुझ्नुहोस् र सोहीअनुसार सहभागीलाई सञ्चार गर्नुहोस् । सुरूवातमा कति हासिल गर्न सकिन्छ भन्ने कुरामा यथार्थवादी (Realistic ) हुनुहोस् र तत्काल सम्बोधन गर्न नसकिएका सवालमा पनि प्रतिवद्धता जाहेर गरी समाधानको लागि पहल गर्नुहोस् ।

**१०: दृश्य सामग्री** **ग१.२.१०**

बोलेको कुरालाई स्पष्ट पार्न बैठकका बेला सञ्चारका वैकल्पिक साधनहरूको उपयोग गर्नुहोस् । जस्तैः पोष्टर, प्रस्तुति वा फ्लिप चार्ट ।

Sphere Handbook (p.260)
"उपलब्ध गराइने सेल्टर सहयोगका प्रकारको निर्धारण गर्नमा अधिकतम सम्भव भएसम्म प्रत्येक प्रभावित घरपरिवारका सदस्यहरू संलग्न हुनुपर्छ । अधिकांश समय उक्त घेरिएको बस्ने ठाउँमा समय बिताउनुपर्ने समुदाय र व्यक्ति तथा पहुँचसम्बन्धी विशेष आवश्यकता भएका व्यक्तिको विचारलाई प्रथमिकता दिनुपर्छ ।"

**बैठकको बेला**

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई आफ्ना विचार राख्न भन्नुहोस् । अपाङ्गता भएका महिला र पुरूष दुवैको सहभागिता सुनिश्चित गर्नुहोस् ।

⇒ समूह केन्द्रित छलफलमा विभिन्न प्रकारका अपाङ्गता भएका व्यक्तिहरूको सहभागिता सुनिश्चित गर्नुहोस् । पहिचान गरिएका अवरोध सम्बन्धित विषयवस्तुअनुसार समूह गठन गर्नुहोस् ।

⇒ डिजाइन र विकल्प प्रदर्शन गर्न स्केल मोडेल वा परीक्षण संरचना (pilot structure ) को प्रयोग गर्नुहोस् । यो सेल्टर निर्माण र मर्मतसम्बन्धी तालिममा पनि उपयोगी हुनसक्छ ।

⇒ सेल्टर र बसोबास कार्यक्रमअन्तर्गतका नक्सा बनाउने इन्जिनियर, निर्णयकर्ताहरूसँगै अपाङ्गता भएका व्यक्तिहरू पनि बसेर चुनौति एवं समाधानका बारेमा छलफल गर्नुहोस् ।

**अपाङ्गता भएका व्यक्तिका लागि सम्भावित अवरोध**

⇒ तपाईँको सहभागिताले कुनै फरक पार्दैन भन्ने विश्वास गर्नु ।

⇒ विगतमा सहभागी हुँदाका नराम्रा अनुभवहरू ।

⇒ केमा हस्ताक्षर गरेको हो भन्ने तपाईँलाई थाहा हुँदैन ।

⇒ खास गरेर नकारात्मक टिप्पणीमा, तपाईँ जे भन्दै हुनुहुन्छ त्यसको परिणाम सोचेर चिन्तित हुनु ।

⇒ बैठक स्थलहरूमा तपाईँका लागि आवश्यक अनुकुलता छैनन् । भौतिक र सञ्चारका अवरोधले तपाईँको सहभागितालाई अवरूद्ध गरेको छ ।

⇒ यातायात खर्चिलो छ र पहुँचमा छैन ।

⇒ तपाईँको समय र विज्ञताको लागि पैसा तिर्नुपर्छ भन्ने सोचेर सहभागी नगराउने ।

**संस्थागत अवरोध जसले अपाङ्गता भएका व्यक्तिहरूको संलग्नतालाई रोक्छ**

⇒ कर्मचारीहरूलाई अपाङ्गता भएका व्यक्तिहरूलाई कसरी संलग्न गराउने भन्ने बारेमा जानकारी छैन ।

⇒ कर्मचारीहरू ती मानिसहरूले सेवाको बारेमा गुनासो गर्छन् होला भनेर चिन्तित हुन्छन् ।

⇒ यस्तो सहभागिताले कार्यक्रमलाई कसरी फाइदा पुर्‍याउँछ भन्ने बारेमा कर्मचारीहरू जान्दैनन् ।

⇒ पर्याप्त समय र आर्थिक स्रोत नहुने ।

⇒ सम्बन्धित आवश्यकताका बारेमा सीमित ज्ञान हुन्छ भनेर विश्वास गर्नु ।

*ओडीआइले अवलम्बन गरेको : Producing better information for disabled people, 2009*

## ग१.३ अनुगमन र पृष्ठपोषण संयन्त्रमा समावेशीकरण

Sphere Handbook ( p.69 )
"अनुगमन सूचनाले परियोजनाको पुनरावलोकनलाई मार्गनिर्देश गर्छ । लक्ष्य गरिएका सर्तलाई आधिकारिकता दिन्छ र लक्ष्य लिइएका मानिससम्म सहयोग पुग्यो कि पुगेन भनेर हेर्छ । यसले निर्णयकर्तालाई समुदायबाट आएका पृष्ठपोषणलाई सम्बोधन गर्न र जल्दाबल्दा समस्या तथा प्रवृत्तिको पहिचान गर्न सक्षम बनाउँछ । [...] जनताद्वारा आफै गरिएको अनुगमनले पछि पारदर्शी र सूचनाको गुणस्तरलाई बलियो बनाउँछ तथा सूचनामा जनताको स्वामित्व सिर्जना गर्छ ।"

पहुँच र समावेशीकरणको लागि सूचक सेल्टर र बसोबाससम्बन्धी गतिविधिको अनुगमनको महत्वपूर्ण हिस्सा हो । पृष्ठपोषण संयन्त्रले अपाङ्गता भएका व्यक्तिहरूलाई आफ्ना विचार र चिन्ताहरू दर्ता गराउने समान अवसर छ भन्ने सुनिश्चित गर्नुपर्छ ।

⇒ *आवधिक अनुगमनले प्रतिवेदनमा सम्बन्धित तथ्यहरूलाई जोड दिनुका साथै अन्तर्वार्ता एवं सूचकमा अपाङ्गतालाई समावेश गर्नुपर्छ र यसलाई पहुँचसहितका ढाँचामा प्रकाशन गर्नुपर्छ ।*

⇒ *रियल टाइम अनुगमनले पहुँचसहितका पृष्ठपोषण र गुनासो गर्ने संयन्त्र तथा अपाङ्गता भएका व्यक्तिका संस्था एवं स्वयंसेवकहरूको सहयोगमा व्यक्तिगत फलोअपलाई समावेश गरिनुपर्छ ।*

**१: सूचक** **ग१.३.१**

सेल्टर र बसोबास क्षेत्रका रणनीतिक कार्ययोजनामा पहुँच र समावेशीकरणसम्बन्धी सूचकलाई समावेश गर्नुहोस् (हेर्नुहोस् क२.१.४) । यसलाई अनुगमनको सुरूवातको बिन्दुको रूपमा उपयोग गर्नुहोस् ।

**२: परामर्श** **ग१.३.२**

अपाङ्गता र यसको उपेक्षा (Exclusion ) सम्बन्धी सूचना सङ्कलन गर्न तथा प्रतिवेदनको सवालमा अपाङ्गता भएका व्यक्तिका संस्था र अपाङ्गता सम्पर्क बिन्दुसँग परामर्श गर्नुहोस् ।

**३: पुनरावलोकन वा समीक्षा गर्ने संयन्त्र ग१.३.३**

तपाईँको अनुगमन र पृष्ठपोषण संयन्त्र अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँचमा छ भन्ने सुनिश्चित गर्न अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँगको परामर्शमा पुनरावलोकन गर्नुहोस् ।

**४: सूचनामा पहुँच ग१.३.४**

कार्यक्रमसँग सम्बन्धित गुनासा कसरी दर्ता गराउने भन्ने बारेमा सम्बोधन र उपचारसम्बन्धी कार्यको बारेमा स्पष्ट सूचना पहुँचसहितका ढाँचामा उपलब्ध गराउनुहोस् । सुन्ने र नसुन्ने खालका गुनासाका बारेमा स्पष्ट हुनुहोस् ।

**५: फलोअप ग१.३.६**

सेल्टर र बसोबासमा पहुँचसम्बन्धी अनुगमन गर्दा प्रणालीमा आधारित (Systematic ) हुनुहोस् । अवरोध र अपाङ्गतासँग सम्बन्धित गुनासालाई वर्गीकरण गर्नुहोस् । वैकल्पिक समाधान र फलोअपको लागि छलफलमा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई सहभागी गराउनुहोस् ।

**प्रश्न सोध्न र गुनासा दर्ता गराउन प्रयोग गरिएका सञ्चारका तरिकाहरूको लागि निम्न कुरामा ध्यान दिनुहोस् ।**

⇒ के पृष्ठपोषण मौखिक र लिखित दुवै दिन सक्छन् ?

⇒ के पहुँचयुक्त ढाँचामा कुनै निश्चित फाराम उपलब्ध छ ?

⇒ अलग्गै बस्ने गरेका अपाङ्गता भएका व्यक्तिहरूले कसरी पृष्ठपोषण दिन्छन् ? जस्तैः गृह भेटबाट, सहयोगी वा फोनको माध्यमबाट आदि ।

⇒ के फोनकल र अक्षरमा लेखिने सन्देश (Text message)ले धेरै मानिससम्म पुग्न मद्दत गर्छ ?

**६: गृह भेट ग१.३.७**

घरभित्रै बसिरहनुपर्ने र टाढा बसिरहेका अपाङ्गता भएका व्यक्तिहरूबाट पृष्ठपोषण सङ्कलन गर्न गृह भेट तथा टेलिफोनको उपयोग गर्नुहोस् । स्वयंसेवक, सामुदायिक कार्यकर्ता र अपाङ्गता भएका व्यक्तिका संस्थाहरूको सहयोग लिनुहोस् ।

समुदायमा भइरहने उपस्थितिले केही समयको अन्तरालमा पहुँच र विश्वासमा बृद्धि गर्छ । अपाङ्गता डेस्कले गुनासा दर्ता गर्ने र अपाङ्गता भएका व्यक्तिहरूलाई आकस्मिकताको अवस्थामा उपलब्ध गराइने राहतमा पहुँच प्राप्त गर्न रोक्ने भौतिक एवं दृष्टिकोणजन्य अवरोधको अनुगमन गर्ने काम गर्नुपर्छ । (हेर्नुहोस् ख२.१.११ र ग१.१.५)

**७: पद्धति** **ग१.३.७**

अनुगमन गर्ने समूहमा अपाङ्गता भएका महिला र पुरूषलाई समावेश गराउनुहोस् । सबै उमेर समूहका र विभिन्न अपाङ्गता वर्गका केटाकेटी, महिला र पुरूषसँग अन्तर्वार्ता लिइएको छ भन्ने सुनिश्चित गर्नुहोस् ।

**८: प्रतिवेदन** **ग१.३.८**

प्रतिवेदनमा अपाङ्गतासम्बन्धी मुद्दालाई उजागर गर्नुहोस् र अपाङ्गता भएका व्यक्तिहरूको उपस्थितिसहितको सामुदायिक बैठकको आयोजना गरी प्राप्त तथ्यहरूका बारेमा छलफल गर्नुहोस् (विस्तृतको लागि हेर्नुहोस् ग१.१) ।

**९: उपलब्धि** **ग१.३.९**

तथ्य तथा छलफलका आधारमा बसोबास र सेल्टर कार्यक्रमलाई थप समावेशी एवं अपाङ्गता भएका व्यक्तिका आवश्यकताप्रति सम्बेदनशील बनाउनुहोस् ।

अनुगमन तथा पृष्ठपोषणले कार्यक्रम व्यवस्थापकहरूलाई आकस्मिक सेल्टर र बसोबाससम्बन्धी गतिविधिमा सुधार गर्न मद्दत गर्छ । जब नयाँ अवरोध आउँछन् त्यसबेला आफ्नो सम्बोधनलाई विस्तार गर्न र परिपूरक बनाउन तयार रहनुहोस् ।

सेल्टर र बसोबासमा पहुँचसहितको वातावरण बनाउन साना कामका लागि नगद वा सामुदायिक श्रम जस्ता गतिविधिलाई मौका दिनुहोस्, खास गरेर त्यस्तो अवस्थामा जहाँ अपाङ्गता भएका व्यक्तिहरूको सुरक्षाको सवाल हुन्छ ।

अनुगमन र लेखाजोखा उपकरणकारूपमा पहुँचसहितको लेखापरीक्षणको प्रयोगको लागि अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई दिने तालिमको उदाहरणको लागि अध्याय क३.१ को घटना अध्ययन हेर्नुहोस् ।

# थप अध्ययनको लागि

⇒ CBM Tool: *Accessible meetings or events*. http://www.inclusive-development.org/cbmtools/part3/1/ Accessiblemeetingsorevents.pdf

⇒ CBM (2009), *Make Development Inclusive: How to include the perspectives of persons with disabilities in the project cycle management guidelines of the EC: A practical guide*. http://www.make-development-inclusive.org

⇒ Disability Services Commission, Western Australia (2010), *Creating Accessible Events*. http://www.disability.wa.gov.au/Global/Publications/ Understanding%2520disability/Built%2520environment/Creating % 2520accessible%2520events.doc

⇒ Handicap International Nepal (2009), *Mainstreaming disability into disaster risk reduction: A training manual*. http://www.handicap-international.org.uk/Resources/ andicap%20International/PDF%20Documents/HI%20 Associations/MainstreamingDisDisasterRiskRedu_2009.pdf

⇒ Office for Disability Issues UK (2008), *Producing better information for disabled people: A toolkit for local authorities*. http://www.keroul.qc.ca/DATA/PRATIQUEDOCUMENT/175_fr.pdf

⇒ Oxfam/World Vision Emergency Capacity Building Project (2007), *Impact measurement and accountability in emergencies – the good enough guide*. http://www.livestock-emergency.net/userfiles/file/ common-standards/Oxfam-2007.pdf

⇒ Seeds for Change (2009), *Facilitator's Guide to Making Meetings Accessible*. http://www.seedsforchange.org.uk

## रूजु सूची ग१. समावेशी लक्षित समूह सञ्चार

- ⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई लक्षित गरेर र सूचनालाई पहुँचमा पुर्याउन अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँगसँगै बसेर सञ्चार योजना बनाइएको छ ।
- ⇒ अपाङ्गता भएका व्यक्तिहरूले उपयोग गर्ने चाहने सञ्चारका साधनहरूका बारेमा उनीहरूसँग परामर्श गरिएको छ र उनीहरूले बैठकका सूचना प्राप्त गर्छन् ।
- ⇒ तपाईंको संस्था, परियोजना र योग्यतासम्बन्धी मापदण्डको बारेमा सूचना बहु पहुँचयुक्त ढाँचामा उपलब्ध छन् ।
- ⇒ सूचना पाटीहरू ह्वीलचियर प्रयोगकर्ताले पढ्न सक्ने उचाइसहित पहुँचका स्थानमा राखिएका छन् ।
- ⇒ आकस्मिकताको अवस्था पूर्व नै अपाङ्गता डेस्क स्थापित छ र त्यहाँ सूचना दिने तथा अपाङ्गता भएका व्यक्तिहरूमाथि पर्ने असरको अनुगमन गर्ने तालिम प्राप्त कर्मचारी छन् ।
- ⇒ दृष्टिसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरूको लागि छापा सामग्री र वेवसाइट पढन् सहज छन् अर्थात् उनीहरूले ठूलो अक्षर र सघन भिन्नता (high contrast ) उपयोग गर्छन् ।
- ⇒ बैठकमा सहभागी हुन जाँदा अपाङ्गता भएका व्यक्तिहरूका लागि यातायात सुविधा उपलब्ध छ र उनीहरूलाई बैठक स्थलमा मार्गदर्शन गराउने वा सहयोग गर्ने कर्मचारी तथा स्वयंसेवक छन् ।
- ⇒ बैठक स्थल सुरक्षित छ र अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा तथा सम्भव अनुकूलता उपलब्ध छ ।
- ⇒ बैठकका समयमा अपाङ्गता भएका व्यक्तिहरूलाई उनीहरूका आवश्यकताको बारेमा सोधिन्छ र आवश्यकताअनुसार साङ्केतिक भाषा दोभाषेको व्यवस्था गरिएको छ ।
- ⇒ बैठक सञ्चालन गर्ने व्यक्ति तथा कर्मचारी अपाङ्गताको सवालमा तालिम लिएका छन् र तस्विरको प्रयोग गरेर स्पष्ट रूपमा सञ्चार गर्छन् ।
- ⇒ सबै उमेर समूहका र विभिन्न वर्गका अपाङ्गता भएका महिला र पुरूषका लागि बैठकमा गरिने छलफल तथा उपकरण समावेशी छन् ।
- ⇒ अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँच र समावेशीकरणलाई सबै परियोजनाका गतिविधिको अनुगमनमा ध्यान दिइन्छ ।
- ⇒ सेल्टर र बसोबास कार्यक्रमको लागि पहुँच र समावेशीकरणसम्बन्धी विशेष सूचक तय गरिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरू पृष्ठपोषण संयन्त्रको बारेमा सुसूचित छन् । सञ्चारका विभिन्न साधन उपयोग गरेर गुनासा दर्ता गराउन सक्छन् ।

⇒ घरमै बसिरहनुपर्ने अवस्थाका अपाङ्गता भएका व्यक्तिहरूले फोनमार्फत वा गृहभेट मार्फत सूचना प्राप्त गरेका छन् । अनुगमन दलले अपाङ्गता विषयमा तालिम प्राप्त गरेको छ तथा दलमा अपाङ्गता भएका महिला र पुरूषलाई समावेश गर्ने प्रयास गरिएको छ ।

⇒ तथ्यहरूलाई बहु पहुँचका ढाँचामा प्रस्तुत गरिएको छ र अपाङ्गता भएका व्यक्ति तथा उनीहरूका संस्थाहरूलाई सम्भव समाधानका बारेमा छलफल गर्न बोलाइएको छ ।

⇒ पृष्ठपोषण एवं सिफारिसका आधारमा सेल्टर र बसोबास कार्यक्रमलाई थप समावेशी तथा पहुँचमा बनाइएको छ ।



विस्थापनको स्थितिमा शरण दिने परिवार वा सहयोग सञ्जालमा पर्ने तनावलाई वैकल्पिक पहुँचका सेल्टर प्राप्त गरेर वा विस्तार गरेर कम गर्न सकिन्छ ।



## ग२. स्वबसोबासमा सहयोग

शरणार्थी र शिविर वा सामूहिक केन्द्रभन्दा बाहिर बसिरहेका आन्तरिक रूपमा विस्थापित व्यक्तिहरू सबैको नजरमा कम देखिने गर्छन् तथा त्यस्ताहरू प्रायः मानवीय सेवाबाट वञ्चित हुनेगरेका छन् । यसरी विस्थापितको संख्या पनि उल्लेख्य नै छ । अर्को परिवारको शरणमा बसेका (living with host family ) अपाङ्गता भएका व्यक्तिहरूलाई शिविरमा वा आकस्मिक सेल्टरमा रहनु राम्रो हुन्छ । पहुँचको अभावमा शारीरिक वा इन्द्रीयसम्बन्धी अपाङ्गता भएका धेरै व्यक्तिहरू सामूहिक केन्द्रमा वा बसोबास व्यवस्था गरिएको ठाउँमा जान पाउँदैनन् ।

यस अध्यायमा विद्यमान घरहरूको उपयोग गरी, भाडाको लागि नगद दिएर वा सेल्टर दिने परिवार (Host family)लाई सहयोग गरी सेल्टर समाधान खोज्ने परियोजनामा अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागी गराउनेसम्बन्धी सिफारिस संलग्न छन् ।

### यस अध्यायमा संलग्न विषयवस्तु

## ग२.१ भाडामा लिइएका पहुँचसहितका सेल्टरमा सहयोग

विस्थापित मानिसहरूलाई सहरी क्षेत्रमा उपलब्ध भवनहरूलाई (भाडाको लागि नगद) प्रयोग गर्दै सेल्टर उपलब्ध गराउने एउटा प्रभावकारी उपाय हुनसक्छ । तपाईंले भाडा सहयोग गर्ने कार्यक्रम गर्न चाहनुहुन्छ भने निम्न लिखित कुराहरूमा ध्यान दिनुपर्छः

**१: सूचना** **ग२११**
अपाङ्गता भएका व्यक्तिहरूले कार्यक्रमको बारेका सूचनामा पहुँच पाएको र कार्यक्रममा समावेश हुन योग्यताका सर्तको बारेमा राम्ररी सञ्चार गरिएको सुनिश्चित गर्नुहोस् ।

ह्विलचियर प्रयोगकर्ताहरूका लागि अपार्टमेन्ट भूइँतलामा र्‍याम्पसहितको र अवरोधमुक्त हुनुपर्छ । हिँडडुलमा कठिनाइ हुने अन्य व्यक्तिहरूका लागि पनि भूइँतलामा मिलाउनुपर्छ, तर उनीहरूको लागि र्‍याम्प वा अवरोधमुक्त आन्तरिक बनावट आवश्यक नहुन सक्छ ।

**२: लेखाजोखा** **ग२१२**
अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग मिलेर कार्यदल बनाउनुहोस् र भाडामा लिन सकिने उपलब्ध सेल्टरहरूको सूची तयार गर्नुहोस् । जसमा अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँचको अवस्थामा ध्यान दिनुहोस् । धेरै तला भएको भवन छ भने भुइँतलामा सेल्टरको लागि आरक्षित गर्नुहोस् ।

अस्थायी, उल्टाउन मिल्ने अनुकूलता स्थायी सुधारमा उपयुक्त हुनसक्छ । यसले घरधनीसँग सम्झौता गर्न पनि सहजीकरण गर्नसक्छ ।

**३: अनुकूलता** **ग२.१.३**
ख२.३ मा उल्लेखित सिफारिसका आधारमा विभिन्न आवश्यक अनुकूलताको सूची घरधनीलाई उपलब्ध गराउनुहोस् । भाडामा लिने कार्यक्रममा सहभागी हुन चाहने घरधनीलाई प्राविधिक सहयोग उपलब्ध गराउनुहोस् ।

**४: विनियोजन** **ग२.१.४**

भाडामा सेल्टर उपलब्ध गराउन छानिएका व्यक्ति वा परिवारको सूची तयार गर्नुहोस् । प्रत्येकलाई उपयुक्त र पहुँचमा हुने सेल्टर इकाइसँग जोडा मिलाउनुहोस् । अपाङ्गता भएका व्यक्तिका आवश्यकता र उपलब्ध पहुँचको स्तरबीचमा सम्भव भएसम्म सबैभन्दा उपयुक्त जोडा मिलाउनुहोस् ।

**५: यातायात** **ग२.१.५**

पहुँचसहितको यातायात उपलब्ध गराउनुहोस् र अपाङ्गता भएका व्यक्तिहरू तथा सहयोग सञ्जाललाई एउटै समूहको रूपमा लिनुहोस् ।

**६: अनुगमन** **ग२.१.६**

अनुगमन र पृष्ठपोषण संयन्त्रलाई अपाङ्गता भएका व्यक्तिहरूको लागि पहुँचमा पुर्याउनुहोस । गृह भेट र फलोअप गर्नुहोस् । (ग १.३)

## ग२.२ अपाङ्गता र होस्ट परिवार सहयोग

बसोबासको व्यवस्थासहित रहेका मानिसहरूको तुलनामा बाहिर त्यति नदेखिने र प्रायः सहयोगबाट बञ्चित हुनेगरेका विस्थापित भएका ठूलो संख्याका मानिसले आकस्मिकताको अवस्थामा कुनै परिवारको शरणमा सेल्टर लिन चाहन्छन् । यो कुरा स्वीकार गर्नु जरूरी छ कि सेल्टर सहयोगको यो रूपले घरपरिवारको आर्थिक अवस्थामा तथा शरण लिने र दिनेबीचको समाजिक सम्बन्धमा ठूलो दवाव दिन्छ ।
विस्थापित व्यक्ति र त्यस्ता व्यक्तिलाई शरण दिने परिवार एउटै इकाइ (ऐक्यबद्ध परिवार)को रूपमा लिनुपर्छ । विस्थापित व्यक्ति आफ्नो परिवार नफर्किएसम्म, पुनःस्थापन नभएसम्म वा एकीकरण सम्भव नभएसम्म सहयोग गर्नुपर्छ । धेरैजसो कुनै परिवार (प्रायः आफन्तसँग)मा शरण लिएर बसिरहेका अपाङ्गता भएका व्यक्तिहरूका लागि इभ्याकुएसन सेल्टर वा अस्थायी बसोबास व्यवस्था उपयुक्त हुन्छ ।
परिवारमा शरण लिएर बसेका अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्दा ध्यान पुर्‍याउनुपर्ने कुरा तल उल्लेख गरिएको छः

शरण दिने परिवारको लागि उचित सम्बोधन गर्दा अपनाइने विभिन्न चरणसहित विस्तृत जानकारी आइएफआरसीको Assisting host family guidelines मा उल्लेख गरिएको छ ।

**१: समावेशी योजना** **ग२.२.१**

उपयुक्त शरण दिने परिवार (host family ) पहिचान गर्दा सेल्टरको पहुँचलाई ध्यान दिनुहोस् र सेवा प्राप्त गर्ने व्यक्ति छनौट गर्दा योग्यताका सर्तमा अपाङ्गतालाई समावेश गर्नुहोस् । स्थानीय अधिकारी तथा कार्यान्वयन र फलोअप गर्ने जिम्मेवारीमा समझदारी गर्न अपाङ्गता भएका व्यक्तिका संस्थाहरूसँग समन्वय गर्नुहोस् ।

प्रभावित क्षेत्रमा अत्यास लाग्नेखाले भौतिक अवरोध छन् भने अलि टाढाको स्थानमा रहेका उपयुक्त परिवारमा सेल्टरको व्यवस्था गर्नु उपयुक्त हुन्छ, तर निश्चित प्रकारका अपाङ्गता र चोटपटकका लागि विशिष्ट प्रकारका सेवा चाहिने हुनसक्छ जुन सबैतिर उपलब्ध हुन सक्दैन । लेखाजोखाको बेला यस कुराको पहिचान गर्नुपर्छ र सेल्टरका विकल्पहरूको छलफल गर्दा विचार पुर्‍याउनुपर्छ ।

शरण दिने परिवारबाट अनुकूलता स्वीकृत हुनुपर्छ (भाडामा दिने व्यवस्थाको विपरीत, जहाँ पहुँचयुक्त वातावरण बनाउन सकिन्छ र कार्यक्रममा सहभागी गराउन आवश्यक हुन्छ, हेर्नुहोस् ग३.२.३) । स्वीकार्य हुन्छ भने शरण दिने परिवारलाई अस्थायी प्रकृतिका र उल्टाउन सकिने अनुकूलता उपलब्ध गराउनुहोस् । एकदमै उपयुक्त प्रकृतिको हस्तक्षेपको लागि निर्णय गर्नु पूर्व स्वामित्वको अवस्था नक्शाङ्कन गर्नुहोस् ।

**२: लेखाजोखा** **ग२.२.२**

व्यक्तिगत आवश्यकता र पहुँचको वर्तमान अवस्थाका आधारमा खाडल (gaps ) पहिचान गर्नुहोस् । शरण दिने परिवारसँग कार्यान्वयन गर्न सकिने सम्भावित अनुकूलताको बारेमा विस्तृत उल्लेख गर्दै सम्झौतामा हस्ताक्षर गर्नुहोस् ।

**३: सहयोग सञ्जाल** **ग२.२.३**

अपाङ्गता भएका व्यक्तिलाई परिवारका सदस्यसँगै वा उही सेल्टरमा वा नजिकको सेल्टरमा सहयोग सञ्जालको व्यवस्थासहित शरण दिन सकिन्छ ।

**४: यातायात** **ग२.२.४**

पहुँच भएका सवारीका साधनहरू उपलब्ध गराउनुहोस् । अपाङ्गता भएका व्यक्ति र सहयोग सञ्जालको लागत व्यहोर्नुहोस् ।

**५: थप सामग्री** **ग२.२.५**

पहुँच भएका सरसफाइका सामग्री, अन्य सामग्री, प्राविधिक वा नगद सहयोगलगायत अपाङ्गता भएका व्यक्तिहरूको ऐक्यबद्ध परिवारलाई आवश्यक अनुकूलताको लागि चाहिने सामग्रीहरू उपलब्ध गराउनुहोस् ।



घरायसी सामग्री र सेल्टर सहयोग सामग्रीको उदाहरणको लागि ख३.२ र ख३.३ अध्ययन गर्नुहोस् । छेकाबार वा आन्तरिक छेकाबार बनाउने सामग्रीलाई प्राथमिकतामा राख्नुपर्छ ।

**६: सेवाको नक्शाङ्कन** **ग२.२.६**

पुनस्थापन गरिएको क्षेत्र (क३.२)मा सेवाको उपलब्धता र पहुँचको लेखाजोखा गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिहरूलाई पहुँच भएका ढाँचामा सूचना उपलब्ध गराउनुहोस् । (हेर्नुहोस् ग.१.१)

**७: अनुगमन र पृष्ठपोषण** **ग२.२.७**

अनुगमनका गतिविधिमा अपाङ्गता भएका व्यक्तिहरूलाई सहभागी गराउने कुरा सुनिश्चित गर्नुहोस् र सञ्चारका विभिन्न साधनको उपयोग तथा गृह भेट गरी पृष्ठपोषण तथा गुनासासम्बन्धी संयन्त्र समावेशी छ भन्ने कुराको सुनिश्चित गर्नुहोस् । (हेर्नुहोस् ग१.१)



परिवारमा शरण लिने अवस्थामा अपाङ्गता भएका व्यक्तिहरूले सामना गर्ने संरक्षणसँग सम्बन्धित मुद्दाहरू पहिचान गर्न सघन र नियमित अनुगमन जरूरी हुन्छ । अपाङ्गता सम्पर्क बिन्दु तथा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूले परिवारमा शरण लिने र दिने दुवैका बीचमा कुनै तनाव सिर्जना भएमा मध्यस्थको भूमिका निर्वाह गर्न सक्छन् ।

## थप अध्ययनको लागि

⇒ IASC (2010), *Host Community Guidelines: Supporting Host Families in Haiti by Tracking Movements, Understanding Needs and Directing Reponses.* http://www.alnap.org/pool/files/host-communityguidelines-
⇒ supporting-host-families-in-haiti-1.pdf

⇒ IFRC (2012), *Assisting Host Families and Communities after Crises and Natural Disaster – A Step-by-Step Guide.* https://www.ifrc.org/ PageFiles/95186/ASSISTING%20HOST%20FAMILIES%20AND%20 COMMUNITIES%20-%20IFRC%202012%20.pdf

⇒ IFRC *Shelter Programming Toolbox (final draft): cheat-sheets of Toolbox 2 and 3 - rental solutions and host families support.*

⇒ UNHCR (2012), *IDPs in Host Families and Host Communities: Assistance for hosting arrangements.* *http://www.alnap.org/pool/files/4fe8732c2.pdf*

## रूजु सूची ग२. स्वबसोबास सहयोग

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई विभिन्न प्रकारका सेल्टरसँग सम्बन्धित गतिविधि र यसका योग्यताका सर्तसम्बन्धी सूचनामा पहुँच छ ।

⇒ सेल्टर र बसोबास सहयोगका प्राथमिकता तथा विकल्पको बारेमा अपाङ्गता भएका व्यक्तिहरूसँग परामर्श गरिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई उपयुक्त हुने पहुँचसहितका सेल्टर इकाइ उपलब्ध गराइएको छ र व्यक्तिगत आवश्यकताको आधारमा अनुकूलता उपलब्ध गराइएका छन् ।

⇒ शरण दिने परिवारलाई शरण दिने अवधिभर गोपनीयताको संरक्षण गर्न र जीवनस्तरमा सुधार गर्न थप सुविधा उपलब्ध गराइएको छ ।

⇒ पहिले नै कुनै परिवारको शरणमा बसिरहेका अपाङ्गता भएका व्यक्तिहरूलाई पनि अन्यसरह उही सेवा र सुविधा उपलब्ध गराइएको छ ।

⇒ पूरा गर्नुपर्ने जिम्मेवारी र उपलब्ध गराउनुपर्ने अनुकूलता सबै उल्लेख गरी शरण दिने परिवार वा घरधनीसँग लिखित सम्झौतामा हस्ताक्षर गरिएको छ ।

⇒ अपाङ्गता भएका व्यक्तिहरूका लागि आफ्नो सहयोग सञ्जालसहित त्यस्तै वा नजिकको सेल्टर इकाइमा पुन:स्थापन हुने विकल्प छ ।

⇒ पुन:स्थापनका समयमा अपाङ्गता भएका व्यक्ति र उनीहरूको हेरचाह गर्नेहरूका लागि पहुँच भएका यातायात उपलब्ध गराइन्छ ।

समावेशी नगद कार्यक्रमले अपाङ्गता भएका व्यक्तिहरूको आर्थिक अवस्थाको पुनःप्राप्तिमा सहभागी मात्र गराउँदैन यसले अवरोधलाई उजागर गर्ने, पहुँचसहितका डिजाइनमा प्राथमिकता दिने र समुदायका नकारात्मक दृष्टिकोणलाई चुनौति दिने काम पनि गर्छ ।

## ग३ अपाङ्गता भएका व्यक्तिहरूका लागि नगद र भौचर

IFRC/ICRC Guidelines for cash transfer programming
"नगद हस्तान्तरणले प्रापकलाई स्थानीय बजारबाट आफ्नै छनौटमा आवश्यक वस्तु तथा सेवासुविधा प्रत्यक्षरूपमा प्राप्त गर्ने अवसर रहन्छ ।"

लाभान्वित समूहलाई आत्मस्वाभिमानका साथ बढीभन्दा बढी छनौटको अवसर दिँदै सेवासुविधा लिन नगद र भौचर दिएर सहयोग गर्ने मानवीय सहायताकर्मीहरूको संख्या बढ्दो छ । नगद वितरण र भौचर दिने एउटा कार्यक्रममात्र होइन, बरू आकस्मिकताको अवस्थालाई सम्बोधन गर्ने र शीघ्र पुनःप्राप्ती (early re-covery ) को लागि उपकरण पनि हो । यसले तपाईँलाई सेल्टर र बसोबाससँग सम्बन्धित गतिविधिलाई सहभागीमूलक तरिकाले गर्न सहयोग गर्छ, तर यसको लागि होसियारी पूर्वक अनुगमन र नजिकबाट फलोअप आवश्यक हुन्छ ।
यस अध्यायमा आकस्मिकता पश्चात आधारभूत सेल्टर तथा बसोबासलाई सम्बोधन गर्न नगद र भौचर जस्ता उपकरणको उपयोगका बारेमा केन्द्रित गरिएको छ । यसको लागि अध्याय ख२ लाई पनि अध्ययन गर्नुपर्ने हुन्छ ।

### यस अध्यायमा संलग्न गरिएका विषयवस्तु

## ग३.१ कामको लागि नगद

Sphere Handbook ( p.263 )
"कम शारीरिक काम गर्न सक्ने व्यक्ति वा विशिष्ट प्राविधिक सहयोग चाहिनेहरूलाई स्थलगत अनुगमन, भण्डार नियन्त्रण, बालहेरचाह, अस्थायी बसोबास वा निर्माणमा खटिएकाहरूका लागि खाना बनाउने र प्रशासनिक सहयोगका जिम्मेवारी दिन सकिन्छ।"

कामको लागि नगद कार्यक्रममा अपाङ्गता भएका व्यक्तिहरू पनि समुदायका अन्य सरह सहभागी र लाभान्वित हुने मौका पाउनुपर्छ।
आय आर्जन बाहेक कामको लागि नगद कार्यक्रमले अपाङ्गता भएका व्यक्तिहरूलाई पुनःप्राप्ती (recovery ) मा योगदान गर्न र समाजको नकारात्मक सोचलाई चुनौति दिने अवसर दिन्छ।

**१: क्षमता** **ग३.१.१**
समुदायमा अपाङ्गता भएका व्यक्तिका क्षमतालाई बुझ्नुहोस् र हरेकलाई निर्माण तथा मर्मतसम्भारका काममा सहभागी हुने मौका दिनुहोस्।

**२: समावेशी योजना** **ग३.१.२**
अपाङ्गता भएका व्यक्ति तथा समुदायका अन्य सदस्यलाई सानासाना परियोजनाहरूको पहिचान गर्न सहभागी गराउनुहोस् र छनौट समितिमा प्रतिनिधित्व गराउनुहोस्।



कामका लागि नगद कार्यक्रम कार्यान्वयन गरेको स्थानमा अपाङ्गता भएका व्यक्तिहरू सहभागी हुन सक्दैनन् भने उनीहरूको परिवारको आर्थिक अवस्थालाई उही तरिकाले चलाउन सकून भन्ने उद्देश्यले नि:सर्त नगद सहयोग उपलब्ध गराउनुहोस्। त्यसले विभेदको अवस्थाबाट मुक्त गर्ने अर्को तरिका घरपरिवारलाई लक्षित गर्दछ। जसअनुसार कुनै परिवारको काम गर्न सक्ने सदस्यलाई काम दिएर नसक्ने व्यक्तिलाई पनि लाभान्वित गराउन सकिन्छ।

यस अवसरलाई सेल्टर र बसोबासमा रहेको पहुँचको अभावतर्फ ध्यानाकर्षण गराउन उपयोग गर्नुहोस् । भौतिक अवरोधलाई प्राथमिकताका साथ सम्बोधन गर्नुहोस् (सुरक्षा सहित) ।

**३: काम र उपकरण अपनाउने** **ग३.१.३**

अपाङ्गता भएका व्यक्तिहरूले सम्पादन गरेका कार्यहरू उनीहरूको व्यक्तिगत क्षमता अनुकूल छन् र यसले उनीहरुको स्वास्थ्यमा नकारात्मक असर गर्दैन भन्ने सुनिश्चित गर्नुहोस् ।

अन्तर्राष्ट्रिय श्रम संगठनले अपाङ्गता भएका कामदारहरूले कसरी उपकरण उपयोग गर्ने भन्ने विषयमा एउटा हाते पुस्तिका प्रकाशन गरेको छ (१) ।

**४: श्रम दल** **ग३.१.४**

सामुदायिक श्रम दल स्थापना गर्नुहोस् जसमा विभिन्न प्रकृतिका अपाङ्गता भएका तथा अपाङ्गता नभएका व्यक्तिहरू एकसाथ काम गरून् र एक अर्कालाई सहयोग गरून् ।

**५: प्रशिक्षण** **ग३.१.५**

गर्नुपर्ने कामको वारेमा स्पष्ट र ग्रहण गर्न सकिने प्रशिक्षण उपलब्ध गराउनुहोस (सिफारिसको लागि, हेर्नुहोस ग १.१)

**६: स्वयंसेवक** **ग३.१.६**

कार्यक्षेत्रमा प्राविधिक र आवश्यकताअनुसार सहयोग दिनेगरी अपाङ्गता भएका व्यक्तिहरूलाई सहयोग गर्न तालिम प्राप्त स्वयंसेवक तथा कर्मचारी उपलब्ध गराउनुहोस् ।

कार्यस्थलमा हुनसक्ने दुर्घटनाबाट बच्न सुरक्षाका उपायहरू अपनाउनुहोस् ।

**७: पारिश्रमिक** **ग३.१.७**

कामको लागि नगद कार्यक्रममा अपाङ्गता भएका व्यक्तिहरूलाई कम शारीरिक परिश्रम (जस्तैः अभिलेख राख्ने, खाना पकाउने, सुपरीवेक्षण गर्ने आदि)गर्नुपर्ने भए पनि अन्य सहभागीहरू सरह ज्याला दिइन्छ भन्ने सुनिश्चित गर्नुहोस् ।

(१) Dilli, David, *Handbook: Accessibility and tool adaptations for disabled workers in post-conflict and developing countries* (Geneva, ILO, 1997)

समुदायको नकारात्मक दृष्टिकोणलाई चुनौति दिनु र अपाङ्गता भएका व्यक्तिहरूको सक्रिय सहभागिता तथा पुनःप्राप्ति (Recovery ) को प्रवर्द्धन मुख्य प्राथमिकतामा हुनुपर्छ ।

**घटना अध्ययन ग३.१**

सन् २००१ र २००२ मा अक्सफाम जि.बी. ले केनियाको बाजिर र तुरकाना जिल्लामा खडेरीको प्रभावबाट मुक्ति दिलाउन कामको लागि नगद कार्यक्रम कार्यान्वयन गर्‌यो । उनीहरूले गह्रौँ र कठिन श्रम गर्न नसक्ने अपाङ्गता भएका व्यक्तिहरू र घरको दैनिक जिम्मेवारीको कारणले तोकिएको घण्टाभरी काम गर्न समर्थ नभएका महिलाहरूलाई सहभागी गराउनुपर्ने कुरा स्वीकारे ।

यस ज्ञानको आधारमा एउटा कामको लागि नगद कार्यक्रमको डिजाइन गरियो जसको प्राथमिक उद्देश्य परिवारको नेतृत्व गर्ने महिलाहरूलाई उनीहरुको जीवनयापनको लागि सहयोग गर्नुथियो र अर्को उद्देश्य विस्थापित परिवारहरूलाई सेल्टर सामग्री प्रदान गर्नुथियो ।

बाजिरमा घरहरूलाई हेरियोज (herios ) भनीन्छ, जसका संरचनाहरू अस्थायी प्रकृतिका हुन्छन् र यसको लागि घोचा तथा म्याट्स प्रयोग गरिन्छ जसलाई डुफुल्स भनीन्छ । परिवारहरू आफ्नो बथान (herd ) सहित एकठाउँबाट अर्को ठाउँमा जाँदा यी घरहरूलाई पनि सँगै लिएर जान सकिन्छ । त्यो समाजमा यस्ता हेरियोजको निर्माण, मर्मत तथा सम्भार गर्ने काम महिलाहरूको हुन्छ । डुफुल्सहरू स्थानीयस्तरमा उपलब्ध सामग्रीबाटै बुन्न सकिन्छ ।

अक्सफाम गाउँका गरिब महिलाहरूको समूहबाट प्रतिगोटाको हिसाबमा डुफुल्सहरू किन्न सहमत भयो । महिलाहरू परियोजनामा सहभागी हुन पाए किनभने तिनीहरूले आफू कति काम कहिले गर्न चाहन्छन भन्ने विषयमा निर्णय गर्न सके । उनीहरू घरमै बसेर काम गर्न सक्षम भए र आफ्ना अन्य जिम्मेवारी पनि पूरा गर्दै यसमा श्रम दिन सके । ज्येष्ठ नागरिक एवं अपाङ्गता भएका व्यक्तिहरूले पनि भाग लिन सके किनभने त्यो काम हलुका र बसेर गर्न सकिने थियो ।

***Adapted from "Cash for Work Programming – A Practical Guide" by Oxfam GB Kenya Programme, June 2002.***

## ग३.२.नगद अनुदान

आकस्मिकताका अवस्थामा समय र उपलब्धता निर्णायक हुन्छन् त्यस्तो बेलामा धेरैजसो सेल्टर समाधानमा "सबैलाई हुने एउटै कुरा" (One size fits all ) अवधारणालाई उपयोग गरिन्छ । वास्तविकतालाई हेर्ने हो भने आवश्यकता व्यक्तिपिच्छे र परिवारपिच्छे फरकफरक हुन्छन् । यही कुरा अपाङ्गता भएका व्यक्तिमा पनि लागू हुन्छ । नगद सहयोगले लगानीका अवसरमा वा व्यक्तिगत आवश्यकताअनुसारका अनुकुलतामा बृद्धि गर्छ ।

नगद अनुदानले भुक्तानीका विभिन्न स्वरूप उपयोग गर्न सक्छ जुन सर्तमा भर पर्छ । अपाङ्गता भएका व्यक्तिहरूसँग उनीहरूका सेल्टरसम्बन्धी आवश्यकतासँग मिल्नेगरी कार्यक्रम कसरी डिजाइन गर्ने भनी परामर्श गर्नुहोस् ।

**१: समावेशी योजना** **ग३.२.१**

सेल्टर कार्यक्रमको लागि नगद अनुदान कार्यक्रमको योजना गर्दा अपाङ्गता भएका व्यक्तिका संस्थाहरूलाई सहभागी गराउनुहोस् र अपाङ्गता भएका व्यक्तिहरूलाई लक्षित गरी छनौटका सर्त निर्धारण गर्नुहोस् ।

अपाङ्गता भएका व्यक्तिहरूका लागि मात्रै अलग्गै विशेष नगद अनुदान कार्यक्रम सञ्चालन नगर्नुहोस् । उनीहरूलाई पनि अरूहरूसँगै सहभागी गराउनुहोस् ।

**२: सूचना** **ग३.२.२**

समुदायका सबै सदस्यहरूको (इन्द्रीय सम्बन्धी अपाङ्गता भएका व्यक्तिहरू) परियोजनासँग सम्बन्धित सूचनामा पहुँच छ र सूचनाहरू विभिन्न तरिका अपनाइ सञ्चार गरिएको छ भन्ने सुनिश्चित गर्नुहोस (ग १.१)

**३: जोखिम न्यूनीकरण** **ग३.२.३**

अपाङ्गता भएका व्यक्तिहरूलाई नगद अनुदान कार्यक्रममा सहभागी हुनमा रोकावट ल्याउने सांस्कृतिक तथा दृष्टिकोणजन्य अवरोध पहिचान गर्नुहोस् । नगद प्राप्त गर्ने व्यक्तिले सामना गर्नुपर्ने जोखिम पनि पहिचान गर्नुहोस् । आवश्यक छ भने समुदायमा सचेत र जनचेतना जगाउने क्रियाकलाप पनि सञ्चालन गर्नुहोस् ।

नगद अनुदानको कारण अपाङ्गता भएका व्यक्तिहरू र त्यसमा पनि अपाङ्गता भएका महिलाहरूमाथि संरक्षणको जोखिम आउन सक्छ । त्यस्ता जोखिम घटाउन तपाईँका क्रियाकलापलाई संरक्षण र स्वास्थ्यसँग सम्बन्धित अन्य सरोकारवालासँग पनि समन्वय गर्नुहोस् ।

मोबाइल फोनको सहायताबाट नगद हस्तान्तरण गर्ने काम पनि अपाङ्गता भएका व्यक्तिहरूका लागि उपयुक्त विकल्प हुन सक्छ, तर सबै ठाउँमा यस्तो सुविधा स्थापित भएको नहुन सक्छ।

**४: नगद पुर्‍याइदिने** **ग३.२.४**

नगद उपलब्ध गराउने सबैभन्दा उपयुक्त संयन्त्रको बारेमा अपाङ्गता भएका व्यक्तिहरूसँग छलफल गर्नुहोस्। यस्तो अनुदान कुनै वितरण केन्द्र, बैंक वा कुनै प्रतिनिधि निकायबाट सङ्कलन गर्नुपर्ने हो भने त्यो स्थान पहुँचमा हुनुपर्छ र अपाङ्गता भएका व्यक्तिहरूका लागि प्राथमिकता पङ्कतिको व्यवस्था गरिएको हुनुपर्छ।

**५: मनोनित प्रतिनिधिमार्फत लिने** **ग३.२.५**

घरमै बसिरहनुपर्ने अपाङ्गता भएका व्यक्तिका लागि उनीहरूले मनोनयन गरेको व्यक्तिले उनीहरुका तर्फबाट नगद बुझेमा मञ्जुर हुनेछ भनी लिखित सम्झौता गर्नुहोस्।

मनोनित प्रतिनिधिमार्फत नगद हस्तान्तरण गर्दा कहिलेकाहीँ भ्रष्टाचार हुने जोखिम रहन्छ। यसको लागि व्यक्तिले चाहेको सामग्री सहयोग वा नगद हातमै दिने कुनै व्यवस्था गर्न सकिन्छ कि विचार गर्नुहोस्।

**६: आपुर्तिकर्ता र पहुँच** **ग३.२.६**

बजारको लेखाजोखा गर्दा आपूर्तिकर्ता रहने स्थानहरू पहुँचमा छन् कि छैनन् हेर्नुहोस्।

**७: यातायात** **ग३.२.७**

अपाङ्गता भएका व्यक्तिका लागि सेल्टर सामग्रीको ढुवानी चुनौतिपूर्ण हुनसक्छ । नगद अनुदानमा यातायात खर्च पनि समावेश गर्नुहोस् वा भाडाको सवारी साधन उपलब्ध गराउनुहोस् । विभिन्न परिवारलाई सामुदायिक सहयोग समूहमा समावेश गर्नुहोस् र त्यसमा अपाङ्गता भएका व्यक्तिहरूलाई पनि समावेश गर्नुहोस्।

**८: अनुगमन** **ग३.२.८**

संरक्षणसँग जोडिएका मुद्दा पहिचान गर्न अनुगमन प्रणाली स्थापना गर्नुहोस् र यस्ता मुद्दा देखापरे तत्काल सम्बोधन गर्नुहोस् । अपाङ्गता भएका व्यक्तिहरूले प्रयोग गर्नसक्ने खालको पृष्ठपोषण र गुनासो राख्न पाउने प्रणाली स्थापित गर्नुहोस् । जस्तैः टोलफ्री फोन नम्बर (Dedicated phone number ) । (हेर्नुहोस् ग१.३)

दानमा भर नपर्नुहोस् । बाहिरको सहयोगमा भरपर्दा शोषणको जोखिम रहन्छ र त्यसमा पनि खास गरी अपाङ्गता भएका महिलालाई यस्तो जोखिम रहन्छ । करारमा बाहिरका कामदारहरू लिनुको सट्टा व्यक्तिगत परिवारका प्रयासमा सहयोग गर्न सामुदायिक श्रम दल स्थापना गर्नुहोस् ।

**९: प्राविधिक मार्गदर्शन** **ग३२९**

सबै प्राविधिक मार्गदर्शन अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा छन् भन्ने सुनिश्चित गर्नुहोस् र त्यसलाई समावेशी तालिम तथा निर्माणसम्बन्धी सुझावमार्फत राम्रोसँग प्रस्तुत एवं सञ्चार गरिएकोछ ।

**१०: गृह भेट** **ग३.२.१०**

प्राविधिक कर्मचारीबाट हुने पूर्व स्थलगत भ्रमणमा पहुँचसम्बन्धी व्यक्तिगत आवश्यकताको बारेमा बुझ्न अपाङ्गता भएका व्यक्तिहरूलाई प्राथमिकता दिनुहोस् र डिजाइन तथा निर्माणसहित सहयोग उपलब्ध गराउनुहोस् ।

**११: थप सहयोग** **ग३.२.११**

अनुगमनबाट पहिचान गरिएका प्राविधिक सवाल र चुनौति सम्बोधन गर्न तथा खण्ड ख मा उल्लेख गरिएजस्ता प्राविधिक डिजाइनको कार्यान्वयन गर्न स्थलगत सहयोग उपलब्ध गराउनुहोस् । अपाङ्गता भएका व्यक्ति र तिनका परिवारलाई फलोअप गर्नुहोस् ।

अपाङ्गता भएका व्यक्तिहरूका विशेष आवश्यकतालाई सम्बोधन गर्न नगद र वस्तु दुबै सहयोग (Cash and in-kind support) मा पनि विचार पुर्याउनुहोस् । बजारमा सहजै उपलब्ध हुन नसक्ने सामग्री पनि त्यहाँ हुन सक्छन् र तिनलाई "घर अनुकूलता परियोजना" (Home Adaptations Project ) को एक हिस्सा बनाउन सजिलो हुनसक्छ (जस्तैः समात्ने बार, शौचालय मेच, पहुँचयुक्त ढोकाका ह्याण्डल, ट्याकटाइल सङ्केत) ।

यी आवश्यकतालाई बजारमा ल्याउँदा नयाँ कामका अवसर आउन सक्छन् र त्यसबाट अपाङ्गता भएका व्यक्तिहरू लाभान्वित हुनसक्छन् ।

**घटना अध्ययन ग३.२**

सन् २०१२ र २०१३ मा नर्वेजियन रिफुजी काउन्सिलले अफगानिस्तानको हेरात प्रान्त, नाङ्गरहार र काबुलमा अर्ध स्थायी सेल्टरलाई नगद अनुदान सहयोग उपलब्ध गरायो। छनौटका सर्तमा अपाङ्गता भएका व्यक्तिहरूले नेतृत्व गरेका परिवारलाई संलग्न गराइयो, तर सहरको सन्दर्भमा एकदमै जोखिमको अवस्थामा रहेको परिवार पहिचान गर्न निकै कठिन भयो । सहयोग गरिएकामध्ये १०४ परिवारमा मात्र अपाङ्गता भएका व्यक्तिहरू रहेको पाइयो (३.५%)।

सामुदायिक ऐक्यबद्धता प्रवर्द्धन गर्न र जोखिममा रहेका लक्षित समूहलाई (खास गरेर महिला र अपाङ्गता भएका व्यक्तिहरू) सहयोग गर्न ४ देखि ५ परिवार मिलाएर लाभान्वित समूह गठन गरियो । हरेक समूहले निर्माण सामग्री खरिद गर्थे र सबै सदस्यहरूले निर्माण कार्य सम्पन्न भैसकेपछि मात्र नगद किस्ता भुक्तानी गरिन्थ्यो ।

कुनै निश्चित डिजाइनभन्दा पनि परियोजनाले विपद्का जोखिम सम्बोधन गर्न प्राविधिक सल्लाह प्रदान गर्यो । निर्माण व्यवस्थापनको कामबाट फुर्सद भएको स्थलगत कार्यदल हरेक व्यक्ति तथा परिवारसँग छलफल र फलोअपमा केन्द्रित हुनसक्यो । एकदमै धेरै जोखिममा रहेका घरपरिवारले ढुवानी, श्रमको लागि थप प्राविधिक र आर्थिक सहयोग पायो ।

प्लट लेआउट, ग्राउन्ड क्लियरिङ, जग खन्ने, ढुंगाको काम, भूकम्पीय जोखिम न्यूनीकरणका उपाय र छानाको डिजाइनको बारेमा सिफारिसका बारेमा व्याख्या गर्न उदाहरणसहितका निर्माणसम्बन्धी नक्सा प्रयोग गरिए । परियोजनामार्फत नै स्वास्थ्य र सरसफाइसम्बन्धी सामग्रीको प्याक तयार गरियो र लक्षित समूहलाई वितरण गरियो ।

**Sphere Handbook (p.268)**

"यद्दपी खानाअन्तर्गत नपर्ने वस्तु (Non-food items ) सम्बन्धी प्रावधान साझा क्रियाकलाप हो । स्थानीय बजार सक्रिय भैरहेको अवस्थामा यस्ता खानाअन्तर्गत नपर्ने वस्तुमा पहुँच पुर्याउन नगद र भौचर उपलब्ध गराउने कुरामा ध्यान दिनुपर्छ ।

## ग३.३ भौचर कार्यक्रम

अपाङ्गता भएका व्यक्तिहरूलाई नगद हस्तान्तरण गर्दा कुनै सुरक्षासम्बन्धी खास चिन्ता हुन्छ भने नगदको सट्टा भौचर जोखिम कम गर्ने उपाय हुनसक्छ । यसले अझ कसरी र कहाँ पैसा खर्च भयो भन्ने विषयमा नियन्त्रण गर्छ ।

भौचर कार्यक्रम तयार गर्न प्रशासनिक तथा अनुगमन खर्चसहित उल्लेख्य समय र स्रोत लाग्छ । त्यसैले यसलाई आकस्मिक प्रतिकार्यको बेलाभन्दा पनि शीघ्र पुन:प्राप्तीको समयमा बढी ध्यान दिनु जरूरी हुन्छ ।

**१: आपूर्तिकर्ता र पहुँच** **ग३.३.१**

कार्यक्रममा सहभागी हुन चाहने आपूर्तिकर्ताहरूको लागि योग्यताका सर्तमा पहुँचलाई पनि समावेश गर्नुहोस् । ख २.३ मा उल्लेखित सिफारिसको आधारमा आवश्यकताको सूची तयार गर्नुहोस् ।

**२: सूचना** **ग३.३.२**

इन्द्रीयसम्बन्धी अपाङ्गता भएका व्यक्तिहरूका लागि समेत भौचर कार्यक्रमसम्बन्धी सूचना पहुँचमा छन् र छनौटसम्बन्धी योग्यताका सर्तको बारेमा राम्ररी सञ्चार गरिएको छ भनी सुनिश्चित गर्नुहोस् ।

**३: भौचरको डिजाइन** **ग३.३.३**

भौचर अपाङ्गता भएका व्यक्तिहरूका लागि पहुँचमा हुनेगरी डिजाइन गर्नुहोस् । भौचरमा छापिएको रकम देख्नमा समस्या हुने व्यक्तिले पनि पहिचान गर्न सक्नेगरी छ भन्ने सुनिश्चित गर्नुहोस् ।

प्राप्त गर्ने व्यक्तिको नाम भौचरमा लेखेको हुनुपर्छ । भौचर उपयोग गर्न असमर्थ अपाङ्गता भएका व्यक्तिहरूको लागि आफ्नोतर्फबाट भौचर बुझ्न प्रतिनिधि मनोनित गर्न पाउने व्यवस्था गर्न सकिन्छ । यो कुरा लिखित रूपमा उल्लेख गर्नुहोस् ।

लक्षित समूहका प्रतिनिधिको उपस्थितिमा डिजाइनहरूको परीक्षण गर्नुहोस् । निरक्षर अपाङ्गता भएका व्यक्तिहरूका आवश्यकतालाई पनि ध्यान दिनुहोस् । भौचरमा लेखिएको रकम सबैले बुझ्नेगरी र यसको बारेमा राम्रोसँग सञ्चार गरिएको छ भन्ने सुनिश्चित गर्नुहोस् ।

**४: डिजाइन समाधान** **ग३.३.४**

सेल्टर निर्माणमा प्रयोग हुने अवरोधमुक्त डिजाइनका मापदण्डको बारेमा पैरवी गर्नुहोस् । समात्ने बार, पहुँचयुक्त ढोकाको ह्याण्डल, र्याम्प र अन्य आवश्यक अनुकूलताको लागि थप आर्थिक तथा प्राविधिक सहयोग उपलब्ध गराउनुहोस् ।

**५: अनुगमन** **ग३.३.५**

आपूर्तिकर्तासम्मको पहुँचको अवस्था अनुगमन गर्न स्वयंसेवक उपलब्ध गराउनुहोस् र भौचरहरू सम्झौता गरिएअनुसारकै संख्या एवं गुणस्तरको वस्तु तथा सेवासँग विनिमय गरिएको छ भन्ने सुनिश्चित गर्नुहोस् ।

**६: यातायात/ढुवानी** **ग३.३.६**

आपूर्तिकर्तासँग सम्झौता गरेर, सवारी साधनको व्यवस्था गरेर वा अन्य यातायातका पहुँचयुक्त माध्यमबाट वा सामुदायिक सहयोग समूहमार्फत सामग्री ढुवानीसहितको सहयोग उपलब्ध गराउनुहोस् ।

**७: प्राविधिक सहयोग** **ग३.३.७**

ख २ मा उल्लेख गरे अनुसारका पहुँचसम्बन्धी आवश्यक समाधान कार्यान्वयन गर्न अपाङ्गता भएका व्यक्तिहरू र उनीहरूका परिवारका लागि प्राविधिक सहयोग उपलब्ध गराउनुहोस् ।

**घटना अध्ययन, ग३.३**

डेमोक्र्याटिक रिपब्लिक अफ कंगोको पूर्व क्षेत्रमा विगत दुई दशक यता उल्लेख्य संख्यामा विस्थापित मानिसहरू आए । युनिसेफको व्यवस्थापनमा उत्तरी किभु, दक्षिण किभु र ओरियन्टल प्रान्तमा र्यापिड रेस्पोनस् टु पपुलेशन मुभमेन्ट (RRMP ) नामक संयन्त्र गठन गरियो ।

RRMP अन्तर्गत अत्यावस्यक घरायसी र सरसफाइसम्बन्धी सामग्रीका लागि भौचर कार्यक्रम थिए । कार्यान्वयन गर्ने साझेदारहरूको रूपमा AVSI, IRC, र Solidarities International ले ह्याण्डिक्याप इन्टरनेशनलसँगको सहकार्यमा अपाङ्गता भएका व्यक्तिहरूको समावेशीकरणमा सुधार ल्याउन एकसाथ काम गरे । यसको मुख्य उद्देश्य उपयुक्त सामग्री उपलब्ध छ र वितरण गतिविधि पहुँचमा छ भन्ने सुनिश्चित गराउनु थियो ।

पहिलो कदम हरेक संस्थाका कर्मचारीहरूमा अपाङ्गताको सवालमा सचेतना जगाउनु थियो । दोस्रो कदम बढीभन्दा बढी जनतासम्म पुग्ने गरी सूचनाका विभिन्न माध्यमहरूको प्रयोग गरी कार्यक्रमको बारेमा सूचना प्रवाह गर्नु थियो । तेस्रो कदम भौचर कार्यक्रम समितिमा अपाङ्गता भएका व्यक्ति (महिला र पुरुष दुवै) को सहभागिता वा प्रतिनिधित्व सुनिश्चित गर्नु थियो ।

यी कदमको परिणास्वरूप यसभन्दा पहिले बाहिर ननिस्किएका अपाङ्गता भएका व्यक्तिहरू पनि पहिचान भए र कार्यक्रममा समावेश गरिए । हिँडडुलमा समस्या हुने व्यक्तिहरूले सामग्री ढुवानी गर्न सहयोग प्राप्त गरे । अति अशक्त अवस्थामा रहेकाहरूका लागि उनीहरूको हेरचाह गर्ने व्यक्तिलाई उनीहरूको तर्फबाट भौचर बुझेर लिनको लागि अनुमति दिइयो ।

यसैसँग समानान्तर रूपमा संस्थाहरूले किनमेल गरिने बजारलाई पनि लक्षित गरेर काम गरे । जसमा कतै पहुँचसहितका बजार खोजी गरियो भने कतै अवरोध हटाउन अनुकूलताको व्यवस्था गरियो । थप सामग्री जस्तै बाटोमा सामान्य र्याम्प र बाटो बनाउन काठको बोर्ड उपयोग गरियो । यसैगरी, प्रतिक्षा गर्ने र मानिसहरू आराम गर्ने ठाउँहरूमा पनि ।

यो सानो हस्तक्षेपले अपाङ्गता भएका व्यक्तिहरूको सहभागिता र संलग्नतामा निकै ठूलो फरक ल्यायो ।

# थप अध्ययनको लागि

⇒ Harvey, P. and Bailey, S. (2011), *Cash Transfer Programming in Emergencies*. http://www.odihpn.org/documents%2Fgpr11.pdf

⇒ ICRC and IFRC (2007), *Cash and voucher in relief and recovery: Red Cross Red Crescent good practices.* http://www.recoveryplatform.org/ assets/publication/cash_and_voucher_in_relief_and_recovery.pdf

⇒ IFRC (2010), *Owner-driven Housing Reconstruction Guidelines.* http:// www.ifrc.org/PageFiles/95526/publications/E.02.06.%20ODHR%20 Guidelines.pdf

⇒ ILO (1997), *Handbook: Accessibility and Tool Adaptations for Disabled Workers in Post-Conflict and Developing Countries.* http://www.ilo.org/ skills/pubs/WCMS_107950/lang--en/index.htm

⇒ UNHCR (2012), *An Introduction to Cash-Based Interventions in UNHCR Operations.* http://www.unhcr.org/515a959e9.pdf

# रूजुसूची ग३. अपाङ्गता भएका व्यक्तिका लागि नगद र भौचर

- ⇒ कार्यक्रमहरूको बारेमा अपाङ्गता भएका व्यक्तिहरूलाई पहुँचसहितका ढाँचामा सूचना प्राप्त छ र छनौटसम्बन्धी योग्यताका सर्तको बारेमा स्पष्टसँग सञ्चार गरिएको छ ।
- ⇒ जोखिम र दृष्टिकोणजन्य अवरोध पहिचान गरिएका छन् तथा तिनलाई जनचेतना अभियानमार्फत सम्बोधन गरिएको छ । कार्यान्वयनको क्रममा अनुगमन पनि गरिएको छ ।
- ⇒ समावेशी कामका लागि नगद गतिविधिले समुदायमा रहेको अपाङ्गता भएका व्यक्तिप्रतिको नकारात्मक धारणालाई चुनौति दिन्छ भन्ने विषयमा ध्यान दिइएको छ ।
- ⇒ कामको लागि नगद वा सामुदायिक श्रम क्रियाकलापभन्दा पहिलेनै समुदायमा अपाङ्गता भएका व्यक्तिको क्षमताको लेखाजोखा गरिएको छ ।
- ⇒ भौतिक श्रम र सहयोगी भूमिका लगायत गर्नुपर्ने विभिन्न कामहरू पहिचान गरिएका छन् । विभिन्न विकल्पबाट छनौट गर्न अपाङ्गता भएका महिला र पुरूषलाई मौका दिइएको छ ।
- ⇒ विभिन्न वर्गका अपाङ्गता भएका व्यक्तिहरू वा उनीहरूका संस्थाहरूसँग पहुँचसहितको नगद र भौचर कार्यक्रमको योजना निर्माणको विषयमा परामर्श गरिएको छ ।
- ⇒ दृष्टिसम्बन्धी समस्या भएका व्यक्ति लगायत सबै अपाङ्गता भएका व्यक्तिहरूलाई भौचरमा लेखिएको वास्तविक रकम थाहा छ ।
- ⇒ शारीरिक अपाङ्गता भएका व्यक्तिहरू नगद अनुदान सङ्कलन गर्न सक्षम छन् वा आफूले मनोनयन गरेको कसैलाई अधिकार दिई उमार्फत रकम बुझ्न सक्षम छन् ।
- ⇒ अपाङ्गता भएका व्यक्तिहरूलाई समुदाय सहयोग दलमा समावेश गरिएको छ वा उनीहरूका निर्माण कार्यलाई सहयोग गर्न करारमा श्रमिकहरू उपलब्ध गराइएको छ ।
- ⇒ व्यवस्थित ढुवानीमार्फत वा समुदाय सहयोग दललाई समावेश गरी अपाङ्गता भएका व्यक्तिहरूका लागि सामग्रीहरू बजारबाट सेल्टरसम्म ल्याउन सहयोग उपलब्ध गराइएको छ ।
- ⇒ आधारभूत पहुँचसम्बन्धी सर्त पूरा नगरेको आपूर्तिकर्ताले उसले उपलब्ध गराउनुपर्ने आवश्यक अनुकूलताको सूची प्राप्त गरेको छ र उसलाई यसको लागि प्राविधिक सहयोग उपलब्ध गराइएको छ ।
- ⇒ सेल्टर र बसोबासका डिजाइनमा व्यक्तिगत अनुकूलताको लागि थप अनुदान तथा प्राविधिक सहयोगसहित पहुँचसम्बन्धी मापदण्ड उपयोग गरिएको छ ।
- ⇒ परियोजनाका कर्मचारी र स्वयंसेवकले स्पष्ट प्रशिक्षण दिन्छन् । प्राविधिक सहयोग र सेवाको लागि सम्बन्धित स्थलमा उपस्थित हुन्छन् ।
- ⇒ आवश्यक परेको बेला सेवा उपलब्ध गराउन र लक्षित समूहको फलोअप गर्न परियोजनाका कर्मचारी तथा स्वयंसेवक अपाङ्गताको सवालमा तालिम प्राप्त छन् ।

# अनूसूची १ : छोटकरी शब्दावली

**ADTF** - **Ageingand disability task force**
**CAP** - **Coodinated Appeals Process**
**CBM** - **Chritian Blind Mission**
**DPO** - **Disaled people's organisation**
**DREF** - **Disater Relief Emergency Fund**
**DVFP** - **Disability ad Vulnerability Focal Point**
**EA** - **Emegency Appeal**
**HI** - **Hanicap International**
**IDP** - **Interally displaced person**
**ICRC** - **InternationalCommittee of the Red Cross**
**IFRC** - **Interational Federation of Red Cross and Red Crescent Societies**
**ILO** - **Interational Labour Organization**
**NFI** - **Non-ood items**
**NGO** - **Nongovernmental organisation**
**NRC** - **Noregian Refugee Council**
**PASSA** - **Partiipatory Approach for Safe Shelter Awareness**
**UNCRPD** - **United Natin Conventions on the Rights of Persons with Disabilities**
**UNICEF** - **United Nations Children's Fund**
**VCA** - **Vulnerability and capacity assessment**
**WASH** - **Water, sanitation and hygiene**

# अनूसूची २ : इकाई परिवर्तन

### मेट्रिक्स

| | | |
|---|---|---|
| 0.01 मिटर | 1 सेन्टिमिटर | 10 मिलिमिटर |
| 0.1 मिटर | 10 सेन्टिमिटर | 100 मिलिमिटर |
| 1 मिटर | 100 सेन्टिमिटर | 1000 मिलिमिटर |
| 1 000 मिटर | 1 किलोमिटर | - |
| 1 000 वर्ग मिटर | 0.001 वर्गकिलोमिटर | 0.1 हेक्टर |
| 10 000 वर्गमिटर | 0.01 वर्गकिलोमिटर | 1 हेक्टर |
| 1 घनमिटर | 1000 लिटर | - |

### आयतन

| इम्पेरियल | मेट्रिक्स |
|---|---|
| 1 घनफिट | 0.028 घनमिटर |
| 1 घनयार्ड | 0.765 घनमिटर |

### लम्बाइ

| इम्पेरियल | मेट्रिक्स |
|---|---|
| 1 इन्च | 2.54 सेन्टिमिटर |
| 1 फिट = 12 इन्च | 30.48 सेन्टिमिटर |
| 1 यार्ड = 3 फिट | 91.44 सेन्टिमिटर |
| 1 माइल = 1760 यार्ड | 1.609 किलोमिटर |

### क्षेत्रफल

| इम्पेरियल | मेट्रिक्स |
|---|---|
| 1 वर्गफिट | 0.093 वर्गमिटर |
| 1 वर्गयार्ड = 9 वर्गफिट | 0.836 वर्गमिटर |
| 1 एकड = 4 840 वर्गयार्ड | 4 047 वर्गमिटर |

### भिरालोपन

| ग्रडियेन्ट | प्रतिशत | डिग्री | अधिकतम लम्बाइ | अधिकतम उचाइ |
|---|---|---|---|---|
| 1:8 | 12.5% | 7.1° | 0.5 मिटर | 0.06 मिटर |
| 1.10 | 10% | 5.7° | 1.25 मिटर | 0.12 मिटर |
| 1:12 | 8.3% | 4.8° | 2 मिटर | 0.15 मिटर |
| 1:14 | 7.1% | 4.1° | 5 मिटर | 0.35 मिटर |
| 1:16 | 6.3% | 3.6° | 8 m | 0.5 मिटर |
| 1:20 | 5% | 2.9° | ~ (10 मिटर) | ~ (0.5 मिटर) |
| 1:50 | 2% | 1.1° | - | - |

## छोटोमिठो

| 90 सेन्टिमिटर | 35 इन्च | ह्विलचियरको लागि चाहिने चौडाइ |
|---|---|---|
| 150 सेन्टिमिटर | 59 इन्च | ह्वीलचियर घुम्न चाहिने व्यास |
| 10 मिटर | 33 फिट | र्‍याम्पको अधिकतम लम्बाइ |
| 85-95 सेन्टिमिटर | 34-38 इन्च | हिँड्ने मानिसको लागि समात्ने बारको उचाइ |

**अनुसूची ३ : अपाङ्गता भएका व्यक्तिको अधिकारसम्बन्धी अन्तर्राष्ट्रिय महासन्धिका सम्बन्धित धारा**

## धारा– ९ : पहुँच

१. अपाङ्गता भएका व्यक्तिहरुलाई स्वनिर्भर जिउन तथा जीवनका हरेक पक्षमा पूर्णरुपमा सहभागी हुन सक्षम तुल्याउन राज्य पक्षले अन्य व्यक्तिसरह समान आधारमा अपाङ्गता भएका व्यक्तिहरुलाई सहरी र ग्रामीण दुवै क्षेत्रमा भौतिक वातावरण, यातायात, सूचना संञ्चार प्रविधि एवं प्रणालीलगायत सूचना र सञ्चार तथा सर्वसाधारणलाई खुल्ला भएका वा प्रदान गरिएका अन्य सुविधा र सेवामा पहुँच सुनिश्चित गर्न उपयुक्त उपाय अवलम्वन गर्नेछन् । त्यस्ता उपायमा देहायबमोजिमका कुराका साथसाथै यससँग अन्तरसम्बन्धित कुराको पहुँचमा बाधा र अवरोधको पहिचान तथा अन्त्यसमेत पर्दछन्ः

क) विद्यालय, आवास, चिकित्सकीय सुविधा र कार्यस्थललगायत भवन, सडक, यातायात तथा अन्य संरचनागत आन्तरिक र बाह्य सुविधा;

ख) विद्युतीय सेवा तथा आपतकालीन सेवा लगायत सूचना, सञ्चार तथा अन्य सुविधा ।

**२. राज्यपक्षले देहायबमोजिमको उपयुक्त उपाय समेत अवलम्वन गर्नेछन् :**

( क) सर्वसाधारणलाई खुल्ला भएको वा प्रदान गरिएको सुविधा र सेवामा पहुँचको लागि न्यूनतम मापदण्ड र निर्देशिका निर्माण गर्ने, जारी गर्ने तथा कार्यान्वियनको अनुगमन गर्ने,

( ख) सर्वसाधारणलाई खुल्ला भएका वा प्रदान गरिएका सुविधा र सेवा प्रदान गर्ने निजी क्षेत्रका संस्थाहरुले अपाङ्गता भएका व्यक्तिहरुको पहुँचको हरेक पक्षमा ध्यान दिएका छन् भनी सुनिश्चित गर्ने,

( ग) अपाङ्गता भएका व्यक्तिहरुले सामना गर्नुपरेको पहुँचका सवालहरुमा सरोकारवाला पक्षहरुलाई प्रशिक्षण प्रदान गर्ने;

( घ) सर्वसाधारणलाई खुल्ला भएको भवनभित्रका तथा अन्य सुविधामा ब्रेल तथा पढ्न र बुझ्न सरल हुने ढंगमा सांकेतिक सूचना प्रदान गर्ने,

( ङ) भवन र सर्वसाधारणलाई खुल्ला भएका अन्य सुविधाको पहुँचमा सहजता प्रदान गर्न पथ प्रदर्शक, वाचक एवं पेशेवर सांकेतिक भाषा अनुवादक लगायत प्राणीबाट हुने सहयोग तथा सहयोगी उपलब्ध गराउने;

( च) अपाङ्गता भएका व्यक्तिहरुको सुचनामा पहुँच सुनिश्चित गर्न अन्य उपयुक्त किसिमका सहायता र सहयोगको प्रवर्द्धन गर्ने,

( छ) इन्टरनेट लगायत नयाँ सूचना र सञ्चारका प्रविधि तथा प्रणालीमा अपाङ्गता भएका व्यक्तिहरुको पहुँच बढाउने,

( ज) पहुँच योग्य सूचना र सञ्चारका प्रविधि तथा प्रणालीको रुपाङ्कन, विकास उत्पादन तथा वितरणलाई सुरुदेखि नै सम्वर्द्धन गर्ने ; जसबाट ती प्रविधि र प्रणाली न्यूनतम मूल्यमा उपलब्ध हुनेछन् ।

**धारा – ३२ अन्तर्राष्ट्रिय सहयोग**

१. यस महासन्धिका लक्ष्य तथा उद्देश्य हासिल गर्नका लागि राष्ट्रिय प्रयासको समर्थनमा राज्यपक्षले अन्तर्राष्ट्रिय सहयोग तथा यसको प्रवर्द्धनको महत्वलाई स्वीकार गर्छन् तथा यस सम्बन्धमा उपयुक्तअनुसार राज्यबीच तथा सम्बन्धित अन्तर्राष्ट्रिय र क्षेत्रीय संगठन र नागरिक समाज खास गरी अपाङ्गता भएका व्यक्तिहरुको सङ्गठनसंगको साझेदारीमा उपयुक्त र प्रभावकारी उपाय अवलम्बन गर्नेछन् । त्यस्ता उपायहरुमा अन्य कुराका साथै देहायका कुरासमेत पर्न सक्नेछन् :

( क) अन्तर्राष्ट्रिय विकास कार्यक्रम लगायत अन्य अन्तर्राष्ट्रिय सहयोग अपाङ्गता भएका व्यक्तिहरुलाई समावेश गर्ने तथा पहँचयोग्य छ भन्ने कुराको सुनिश्चित गर्ने;

( ख) सूचना, अनुभव, प्रशिक्षण कार्यक्रम तथा सर्वोत्तम अभ्यासको विनिमय तथा हिस्सेदारीमार्फत क्षमता विकासलाई सहज तुल्याउने तथा सहयोग पुर्याउने;

( ग) अनुसन्धान तथा वैज्ञानिक र प्राविधिक ज्ञानको पहुँचमा सहयोग सहज तुल्याउने;

( घ) पहुँचयोग्य तथा सहयोगात्मक प्रविधिमा पहुँच र हिस्सेदारीद्वारा तथा प्रविधि हस्तान्तरणमार्फत उपयुक्तअनुसार प्राविधिक तथा आर्थिक सहयोग प्रदान गर्ने ।

२. यस महासन्धिअन्तर्गत राज्यपक्षले निर्वाह गर्नुपर्ने जिम्मेवारीमा प्रतिकूल प्रभाव नपार्ने गरी यस धाराको व्यवस्था गरिएको छ ।

In partnership with




ह्याण्डिक्याप इन्टरनेशनल गरिवी र उपेक्षा, द्वन्द्व र विपद्का अवस्थाहरू भएका ठाउँमा काम गरिरहेको एक स्वतन्त्र र निष्पक्ष संस्था हो । यसले सँगसँगै अपाङ्गता भएका व्यक्ति र एकदमै जोखिममा रहेका व्यक्तिहरूसँग उनीहरूका आधारभूत आवश्यकताको सम्बोधन, जीवनस्तरमा सुधार, मौलिक हक र आत्मस्वाभिमानको सम्मानलाई प्रवर्द्धन गर्नको लागि काम गर्छ ।




सी.वी.एम. अपाङ्गता भएका व्यक्तिहरूको गुणस्तरीय जीवनको विकासका लागि काम गर्न प्रतिवद्ध अन्तर्राष्ट्रिय क्रिस्चियन विकास संस्था हो । यसले विश्वका अति गरिव मुलुकमा अपाङ्गतालाई गरिबीको परिणाम र कारणको रूपमा बुझेर सम्बोधन गर्छ ।



International Federation
of Red Cross and Red Crescent Societies

रेडक्रस तथा रेडक्रिसेन्ट सोसाइटीको अन्तर्राष्ट्रिय महासङ्घ विश्वको सबैभन्दा ठूलो मानवीय सेवाको लागि स्वयंसेवी संस्था हो । विश्वभर रहेका १८९ वटा हाम्रा सदस्यहरू, राष्ट्रिय रेडक्रस सोसाइटी र रेडक्रिसेन्ट सोसाइटीसँगै काम गर्दै हामी हरेक वर्ष दीर्घकालिन सेवा र विकास कार्यक्रममार्फत ९ करोड ७० लाख मानिससम्म पुग्ने गर्छौं । यसैगरी, विपद् प्रतिकार्य कार्यक्रम र शीघ्र पुनः प्राप्ती (early recovery) कार्यक्रममार्फत ८ करोड ५० लाख मानिससम्म पुग्छौं । बढी जोखिममा रहेका मानिसहरूका स्वास्थ्यसम्बन्धि आवश्यकतालाई पूरा गर्न र उनीहरूको जीवनस्तरमा सुधार ल्याउन हामी विपद् पूर्व, विपद्को अवधिमा र पश्चात काम गर्छौं । हामी कसैलाई राष्ट्रियता, जाती, लिङ्ग, धार्मिक विश्वास, वर्ग र राजनीतिक आस्था कुनै पनि आधारमा विभेद गर्दैनौं ।

रणनीति २०२० ले निर्देश गरे अनुसार हाम्रो सामूहिक कार्ययोजनाले यस दशकका मानवीय र विकाससम्बन्धि चुनौतिलाई सम्बोधन गर्नेछ । हामी जीवन बचाउन र सोचमा परिवर्तन ल्याउन प्रतिवद्ध छौँ । हाम्रो बलियो पक्ष भनेको स्वयंसेवी सञ्जाल, समुदायमा आधारित ज्ञान, विज्ञता र हाम्रो स्वतन्त्रता अनि निश्पक्षता हो । हामी विकास साझेदारको रूपमा र विपद् प्रतिकार्यमा मानवीय मापदण्डमा सुधार ल्याउँछौँ । हामी निर्णयकर्तालाई सँधै जोखिममा रहेका मानिहरूको चासोमा काम गर्न उत्प्रेरित गर्छौं । परिणामस्वरूप : हामी स्वस्थ र सुरक्षित समुदाय निर्माण गर्छौं, जोखिमको मात्रालाई न्यून गर्छौं र विश्वमा शान्तिको संस्कारलाई प्रवर्द्धन गर्छौं ।